# श्रीरामगीता भाषा

## शंकासमाधान सहित भा० टी०

( कविवर भानुभक्ताचार्य कृत )



प्रकाशक-सर्व हितैषी कम्पनी,

जालपा देवी रोड, बनारस। मू० १॥)

॥ श्रीगणेशायनमः ॥

# रामगीता माहात्म्य ।



श्रीरामगीता माहात्म्यं कृत्स्नं जानातिशंकरः ॥ तदर्द्धं गिरिजा वेत्ति तदर्द्धं वेद्म्यहं मुने । तत्ते किंचित्प्रवक्ष्यामि कृत्स्नं वक्तुं न शक्यते॥१॥

नारदलाईब्रह्माजी आज्ञागर्दछन् हेनारद श्रीरामगीताको महात्म्य संपूर्ण ता श्रीमहादेवजी मात्र जान्दछन् पार्वतीजीपनी आधाजांदछिन् मताचौथाईमात्र जांदछू तेस्माके हिअलिकति तिम्राअगाड़ो वर्णनगर्दछू संपूर्ण भन्नता-

मअसत्कछू अर्थात् सक्दीन ॥ १ ॥

यज्ज्ञात्वातत्क्षणाल्लोकश्चित्तशुद्धि-मवाप्नुयात् । श्रीरामगीतायत्पापं न नाशयतिनारद ॥ २ ॥ तन्ननश्यति-तीर्थादौ लोकेक्वापि कदाचन ॥ तन्न-पश्याम्यहं लोके मार्गमाणोऽपि स-र्वदा ॥ ३ ॥

जौन रामगीतालाई जानिकन तेसैसमयमा मनुष्यको अन्तः करणशुद्धहुन्छ हेनारदजी जस्पापलाई रामगीताले नाशगरेन भने तेस्पा-पलाई त्रिलोकका तीर्थहरू नाशगर्न सक्दैनन् मंजिलो खोज्दापनी अरूसंग तेस्पापलाई पाइनजौन रामगीताले नाश भएको छैन अर्थात् संपूर्ण पाप लाई श्रीरामगीता नाश-गर्दछ॥ २ ॥ २ ॥

रामेणोपनिषत्सिन्धु मुन्मथ्योत्पादितामुदा ॥ लक्ष्मणायार्पितां गीता सुधांपीत्वाऽमरोभवेत् ॥ ४ ॥

श्रीरामचन्द्रले उपनिषद्रूपि समुद्र लाई मथन गरिकन गीतारूपि अमृतझिकेर लक्ष्मणजिलाईदिया तेस्लाई पानगर्नेपुरुष अमर-हुन्छ अर्थात् देवता हुन्छ ॥ ४ ॥

जमदग्निसुतः पूर्वं कार्त्तवीर्यवधे च्छया। धनुर्विद्यामभ्यसितुंमहेशस्यांतिके वसन् ॥ ५ ॥

जमदग्निऋषिकाछोरा परशुरामले पैले कार्त-वियंराजालाई मार्नेइच्छागरेर शस्त्रविद्या पढना-कानिमित्त महादेवजोका नजिकरहथे ॥ ५ ॥

अधीयमानां पार्वत्या रामगीतां

प्रयत्नतः । श्रुत्वा गृहीत्वाऽनुपठन्ना-
रायणकलामगात् ॥ ६ ॥

तेस्समयमा पार्वतीजी रामगीता पढ्थिन् तेस् रामगीतालाई परशुरामजीले सुनेर तेस् लाई ग्रहणगर्नाले नारायणको कलाकन प्राप्त गरे अर्थात् नारायणभए तेसकारणले १० अवतारमा १ परशुरामावतार पनि कहिन्छ ६

ब्रह्महत्यादि पापानां निष्कृतिं यदि
वाञ्छति । रामगीतां मास मात्रंपठि-
त्वा मुच्यते नरः ॥ ७ ॥

जो मनुष्य ब्रह्महत्यादि पाप देखी छुट्ने इच्छा गर्छ सो १ मैन्हा रामगीतालाई पढोस् तेस्ले सब् पाप नष्ट हुन्छ ॥ ७ ॥

दुष्प्रतिग्रहदुर्भोज्य दुरालापदि स-

म्भवम् । पापंयत्तत्कीर्तनेनराम गीता विनाशयेत् ॥ ८ ॥

दुष्ट पुरुषको प्रतिग्रह अर्थात् दानलिएर अथवा दुष्ट अन्न खाएर अथवा दुष्ट वचन बोलेर उत्पन्न भएको पापलाई रामगीताको कीर्तनले मात्र छुट्छ ॥ ८ ॥

शालिग्राम शिलाग्रे च तुलस्यश्वत्थसन्निधौ । यतीनांपुरतस्तद्वद्राम-गीतां पठेत्तु यः ॥ ९ ॥

शालिग्राम तुलसी पीपल वृक्षकासमीप अथवा संन्यासिहरूका साम्ने गई रामगीता पाठ गरोस् ॥ ९ ॥

स तत्फलमवाप्नोति यद्वचोऽपि न गोचरम् रामगीतां पठन्भक्त्या यः श्राद्धेभोजयेद् द्विजान् ॥ १० ॥

T

तेस्को फलयो पाइन्छ भनेर मुखले भनि दैन अर्थात् मोक्ष पाउँछ और जो श्राद्धका दिन ब्राह्मणले खाने बेला॥ रामगीतापाठ-गरि सुनाउँछ ॥ १० ॥

तस्यते पितरःसर्वेयांति विष्णोः परंपदम् । एकादश्यांनिराहारोनिय-तोद्वादशीदिने ॥ ११ ॥ स्थित्वाग-स्त्यतरोर्मूले रामगीतां पठेत्तु यः ॥ स एवराघवः साक्षात्सर्वदेवैश्च पू-ज्यते ॥ १२ ॥

तेस्कापितृहरू विष्णुलोक वैकुण्ठको वास-पाउँछन्जोएकादशिका दिन निराहारभै व्रत-गरी जितेंद्रियभैद्वादशीकादिनमा अगस्तिका-रुषमनि रामगीतापाठगर्छ त्योसाक्षात् राम-तुल्यहुन्छ अर्थात् देवता हरूपनि तेस् पुरुषलाई

पूजागर्दछन् ॥ ११ ॥ १२ ॥

विना दानं विना ध्यानं विना तीर्था-
वगाहनम् । रामगीतांनरोऽधीत्यतद-
नन्तफलंलभेत् ॥ १३ ॥

दान बिना ध्यान बिना तीर्थ स्नान बिना पनि जो मनुष्य रामगीतालाई पढ्दछ सो अत्यन्त फल पाउँछ अर्थात् सो पुरुषले दान ध्यान तीर्थ स्नानले सहित रामगीता पढ्यो भने ता कतिफल पाउला म के भनूं जीवन्मुक्त ता अवश्य हुन्छ ॥ १३ ॥

इति श्रीब्रह्माण्डपुराणे उत्तरकाण्डे
रामगीता महात्म्यं सम्पूर्णम् ॥



T

॥ अथ रामगीता प्रारभ्यते ॥



श्रीमहादेव उवाच ॥ ततोजगन्मंगलमंगलात्मना विधायरामायणकीर्ति मुत्तमाम् । चचारपूर्वा चरितं रघूत्तमो राजर्षिवर्यैरभि सेवितं यथा।१।

श्रीसदाशिव महादेवले लोकको हित उपदेशहोस् भन्नाका खातिर राम लक्ष्मण रूप यो गीता पार्वतीजीलाई भन्नुभो हे पार्वती श्रीरामचन्द्रले रावणादिको बधगरेर केहि वर्ष

राज्यगरे अनन्तर लोकापवाद हुँनाले सीता-जीलाई त्यागगरे। संपूर्ण जगत् को जो मंगल तेही मंगल ( ब्रह्मानन्द स्वरूप ) यस्ता फेरि कस्ता भने जगत्का मङ्गल स्वरूप आत्म मूर्ति रघुवंश कुल भूषण परम उत्तम श्रीरामचन्द्र सँग श्रेष्ठ वक्ता श्रोता अर्थात् प्रश्न उत्तर सम्वादरूप श्रवण द्वारामोक्ष दिने यस्तो जो उत्तम रामायणको कीर्त्ति अर्थात् यश वाल्मि-की श्रीवेदव्यासादि रचितनाना प्रकारका राम चरित्र सो प्रथम श्रीलक्ष्मण प्रति वर्णन-गर्दा भये अनन्तर पूर्व पैल्हेका पुर्खा जो रघुवंशका कुलमा भयाका रघुआदि राजर्षी तिंको चरित्र प्रजा पालन 'दान, दया शील शूरता र बेदांतादि सत् कथनको श्रवण र केवल वेदविहित आचार धर्म विषे तत्पर

यस्तो परंपरादेखी चलि आयाको हाम्रा कुलमा राजर्षिहरू भयाका श्रेष्ठ धर्म पालनादिशुभ आचरण गर्थे यस्तै अरू राजाहरू चन्द्रवंशी पनी श्रेष्ठआचरण गर्थे। तेइ श्रेष्ठ आचरण हामिले पनि अवश्य गर्नु पर्छ वेद विरुद्ध कुलमान चलि आयाको काम गर्नु हुन्न "यद्यदाचरति श्रेष्ठ स्तत्तदेवेतरोजनः ॥ सयत्प्रमाणं कुरुतेलोकस्तदनुवर्तते" इत्यर्थः ॥

सौमित्रिणा पृष्टउदारबुद्धिनारामः कथाप्राहपुरातनोशुभाः। राज्ञः प्रमत्तस्य नृगस्य शापतोद्विजस्य तिर्यक्त्वमथाहराघवः ॥ २ ॥

सौमित्रिणेति। यस्ताप्रकारले सौमित्रिजो सुमित्राका छोरा लक्ष्मण ती कस्ताभने उदार

गुरु शास्त्रका बचनमा छ विश्वास जस्का यस्ता महागुणवान् अर्थात् दान दया शील धर्ममा तत्पर छ बुद्धि जस्का यस्ता लक्ष्मण सोध्दा भयेतब श्रीरामचन्द्रजीले प्राचीन जो राजसम्बन्धी शुभाशुभ धर्म अधर्मको निर्णय कहे तेस्मा धर्मको कथा प्रथम श्लोकमा कहियो, अधर्मको कथा संक्षेपले दोश्रा श्लोकमा कहिन्छ राजमदले उन्मत्त भयाका राजानृग बड़ा धर्मात्मा हुन् तरएक बेरदान भयाकी गाई फेरि धोकाले आर्का ब्राह्मणलाई दिये ती ब्राह्मणका वादा विवादमा निर्णय गर्न सकेनन् र ब्राह्मणले छेपारो भएस्भनि राजा-लाई श्रापदिएतर राजाले जानेर यो काम गरेको व्हैन तथापि अज्ञानले ब्रह्मस्वहरेता यस्तो अवस्था प्राप्त भो भने जानिकन ब्रह्म-

स्वहर्नें लाई कत्ति को पातक होला भन्ना-खातिर श्रीरामचन्द्रजीले यो आशय प्रगट-गर्नु भो ॥ २ ॥

कदाचिदेकान्तउपस्थितंप्रभु रामं रमालालितपादपंकजम् । सौमित्रि-रासादितशुद्ध भावनःप्रणम्यभक्त्या-विनयान्वितोऽब्रवीत् ॥ ३ ॥

कोही समयमा लक्ष्मिले सेवागरी येकोछ चरणकमलजस्का तेस्ता श्रीरामप्रभुउपाधि रहित एकांतमा बसेकाबेलामा शुद्ध भावना ले युक्तयस्ता लक्ष्मण भक्तिले विनयले अर्थात् नम्रभै दण्डवत् गरि बिन्ति गर्नलागे गुरुको-शरण पर्नु केले भने नम्र भाव भक्तिले योपनी सूचन गराए ॥ ३ ॥

त्वं शुद्ध बोधोसिहिसर्व देहिनामा-
त्म स्यधीशोऽसिनिराकृतिः स्वयम्
प्रतीयसेज्ञानदृशां महामते पादाब्ज-
भृंगाहितसंगसंगिनाम् ॥ ४ ॥

हे महामते महामती भनेको सर्वज्ञछबुद्धि जस्का यस्ता सर्वज्ञहजूरशुद्ध बोध अर्थात् निर्विकार-मायामलरहित शुद्धचैतन्य सर्वभूत विषे आत्मास्वरूपले रहेकाछौ जीवहजुरकोप्रतिबिम्ब हजूरको अंशहो जस्तै अंशरअंशीकोअभेदहुन्छ तस्तै हजूरका लक्षस्वरूपले जीवभिन्नछैनहजुर अधीशन्हौ अर्थात्यो अधिष्ठान कूटस्थ अन्तर्यामि वास्तव भेदाभाव रहित सर्वात्मसाक्षिस्वरूपन्हौ निराश्रुति भनेकोस्थूल सूक्ष्मकारणउपाधिले रहितछौ हजूर स्वयंप्र

काशछौ सूर्यचंद्र अग्निजोप्रकास रूपछन् सो हजुरकाप्रकाशले प्रकाशितछन् सूर्यादि ले हजुर प्रकाश्मानहोइबक्सनुहुन्नतेस् कारणले हजूरस्वप्रकाश आफ्ना प्रकाशले गरिकनप्र काशमानहोइ बक्सिन्छहेप्रभु मेरोनिर्विकार स्वरूपजो वर्णनगर्‍यौ सो अरूपण्डितादिर कर्मउपासनागर्ने मेराभक्तहरू नानाप्रकारको मतावलम्बिद्वैतबादि हरूयस्तो मेरोनिर्विकार रूपलाईकिन जान्दैनन् भन्ने आज्ञा होला।हे करुणासिन्धु श्रुति प्रतिपादितहजूरकोनिर्वि कारस्वरूपछ सोवेदान्त वाक्यजनिततत्वज्ञा नविना अर्थात् आत्मस्वरूपको ज्ञानविना एस्प्रकारको हजुरको स्वरूप प्रतितहुँदैन तेस्कारण्ले आत्म ज्ञान राहत श्रुतिको अनादर गर्ने विवेक ज्ञानले रहित मूर्ख

आफुलाई वृथापण्डित मान्ने भक्त र कर्म उपासना गर्ने हजुरको चरण कमल देखि विमुख ज्ञान भ्रष्ट मनुष्य यस् प्रकारका हजुरको स्वरूप जान्दैनन् हजुरको अव्यभिचारिणि भेदरहित भक्तिका अधिन छन् सो हजुरको पूर्ण झैं कृपाविना प्राप्तहुनु दुर्लभ छ अरु हजुरका चरण कमलमा भ्रमर झैं भयाको द्वैतसन्सारको आशा छोड़ेका केवल् हजुरका चरणैको १ आधार मानि रहेका यस्ता पुरुष अमृतरूप हजूरका दृष्टिले यस्तो परमपद कन पाउँछन् ॥ ४ ॥

अहंप्रपन्नोऽस्मिपदाम्बुजंप्रभो भवापवर्गंतव योगिभावितम् । यथांजसाज्ञानमपारवारिधिं कथं-तरिष्यामितथानुशाधिमाम् ॥ ५ ॥

अहंप्रपन्नइति । सन्सार समुद्रको अपवर्ग भनेको निबृत्ति जस्तातरहले हुन्छ यस्ता हजुरको चरण कमलको म शरणछू कस्ता हजुरको चरण कमल भने सन्सारानुबृत्तिका वास्ते योगिहरूले सेवा गरिएका अपार अर्थात् जस्को वारपार छैन आदि अन्त्त रहित यस्ता जो सन्सार रूपी महासमुद्र अज्ञान जन्य जस्ता रीतले मलाहा नाउमा राखेर नदिमा सुखपूर्वक उतार्छ यस्तै यो सन्सार रूपमहाँ समुद्रदेखी पारहोऊँ सो कृपागरी म अज्ञानिलाई उपदेश बक्सीयोस् किनभने हजुर मेरापरम गुरू एस्कारणले हजुरका चरणकमल देखी व्यतिरिक्त संसार समुद्रको पारतार्ने आर्को गुरु यो जगतमा कोहि देखिदैन ॥ ५ ॥

श्रुत्वाऽथसौमित्रि वचोऽखिलंत दाप्राहप्रपन्नार्तिहरः प्रसन्नधीः । विज्ञानमज्ञानतमोपशांतयेश्रुति प्रपन्नं क्षितिपालभूषणः ॥ ६ ॥

श्रुत्वेति । यस्ता प्रकारले श्रीरामचन्द्रजी लक्ष्मणजीका संपूर्ण वचन सुनिकन आज्ञा गर्न लाग्नुभो कस्ता रामचन्द्र भने प्रपन्न भनेको भक्त जन तिन्को अति जो जन्म मरण रोग सन्सार रूपो दुःख तेस्को दूर गर्ना निमित्त अति समर्थ अर्थात् शरणागत प्रतिपालक भयाका प्रसन्न बुद्धि श्रम रहित आफ्ना भक्तका ऊपर अनुग्रहमा छ बुद्धि जस्का यस्ता अर्थात् आफ्ना भक्तलाई सन्सार दुःखदेखी उद्धार गर्न छ मन जस्का

T

यस्ता सम्पूर्ण क्षितिपाल जो राजा तिन्का शिरोभूषण अर्थात् सम्राट् विज्ञानजो आत्म तत्वको ज्ञान अर्थात् शुद्धचेतन आत्मस्वरूप लाई जान्ने ज्ञान अज्ञानरूप अन्धकारको शांतिहोस् भन्नाका निमित्त "तमेवविदित्वानि मृत्युमेति नान्यःपंथा विद्यतेयनाय आनन्दं ब्रह्मणो विद्वान्न बिभेतिकुतश्चन" इत्यादि श्रुतिस्मृति प्रमाण जानी तत्वज्ञानको हेतु पैल्हे आज्ञा गर्न लाग्नुभो ॥६॥

आदौस्ववर्णाश्रमवर्णिताः क्रियाः
कृत्वा समासादित शुद्धमानसः ॥
समाप्यतत्पूर्वमुपात्तसाधनःसमा श्रये
त्सद्गुरुमात्मलब्धये ॥७॥

T आदाविति आदौ भनेको प्रथम आफ्नु

वर्णाश्रमविषेशास्त्रले प्रतिपादित अर्थात् कहे
कोनैमित्तिकयज्ञदानादि कर्म तेस्लाई निस्का
मनाईश्वरार्पणवेस् प्रकारले गर्नु जब अन्तःक
रणसमासादित भनेको शुद्धरागद्वेषादि मल
रहित प्राप्तभए पछितब तेस्लाई त्यागगर्नु
तत्पूर्वउपारामनेको तेस्कापछि शमदम आदि
साधनगरितेस्लाई दृढगरि वैराग्यपूर्वकसंपूर्ण
कर्मलाई त्याग पाप पुण्यमा मनुष्यको प्रवृ
त्तिहुँछ किनभनेकोहिलाई अधर्महीमा सुख
मिल्छ जस्तै हिंसाचोरि व्यभिचार आदि
कोहिलाई धर्ममासुख मिल्छजस्तै अग्निहोत्र
गोदान भूमिदान परोपकार साँचो बोल्नु
इत्यादि तेस्ले स्वर्गादिकको प्राप्ति अधर्मले
नरकादि दुःखकोप्राप्तिहुँछयस्तै प्रकारलेपूर्णोक्त
र्मलेप्राप्तभयेको योदेहतेस्लेगरेको योपापपुण्य

T

रूपगरी आत्मलाभार्थ अथवातत्वमसिआदि महावाक्यको अर्थ जान्ना निमित्त वेदवेत्ता ब्रह्मनिष्ठ सतगुरुका आश्रममा गईशरणपरोस् किनभने आफ्नाबुद्धिकाबलले बिचारगरेको महावाक्यको अर्थ त्योफल रहित हुन्छ फलीभूत हुँदैन ॥ ७ ॥

क्रियाशरीरोद्भवहेतुरादृताप्रियाप्रियौतौभवतः सुरागिणः । धर्मेतरौ तत्रपुनः शरीरकंपुनः क्रिया चक्रवदीर्यतेभवः ॥ ८ ॥

क्रियेति । भवभनेको यस्चक्राकार संसार लाइ ( ईर्यते ) कहिंछ विवर्तभनेको आफ्नु प्रथम रूपलाई न छोडिदोअन्याको रूपले प्रतीत हुँनु जस्तै डोरि आफ्नु रूप न त्यागि

सर्प रूप देखिन्छ जस्तै ब्रह्म आफ्नुरूप न त्यागि संसार चक्ररूप प्रतीतहुँछ सो भंछन् आदर पूर्वक प्रथम उस् जन्ममा गरेको जो अनेकप्रकारका पाप पुण्यरूप कर्म सो यो वर्तमान शरीरको उत्पत्ति अर्थात् जन्म हुने कारण एहीहो एही वर्तमान शरीरमा प्रीतिगारि आफ्नू ठानि अज्ञानले तेस्को सुखको अर्थ बिषयको अभिलाषा अर्थात् इच्छा हुन्छ तेस् इच्छालेशास्त्र प्रसिद्ध धर्म अधर्म राग द्वेष सुख दुःख र पाप पुण्यमा मनुष्यको प्रबृत्ति हुन्छ किन भने कोहिलाई अधर्मैं मा सुख मिल्छ जस्तै हिंसा चोरि व्यभिचार आदि कोहि लाई धर्मैंमा सुखमिल्छ जस्तै अग्निहोत्र गौदान भूमिदान परोपकार साचो बोल्नु इत्यादि तेस्ले स्वर्गादि

काप्राप्ति अधर्मले नर्कादिदुःखको प्राप्तहुन्छ एस्तैप्रकारले पूर्वकर्मले प्राप्त भएको योदेह तेस्लेगरेको योपापपुण्यरूपकर्म तेस्कोफलभोगनानिमित्त फेरिपछिजन्म अवश्यहुन्छएस्तै प्रकारले बारम्बारकर्मको फलभोगनानिमित्त अवश्य जन्मनु मर्नुपर्छ जस्तैकुह्मालेलेडंडाले चलायाको चक्रभ्रैंतस्तै यो जीव आफ्नाकर्मकाबशले उत्तम मध्यम नीच अर्थात् देव, मनुष्य, पशु, पक्षिइत्यादिचौरासीलाखयोनिमा घुम्नुपर्छ ॥ ८ ॥

अज्ञानमेवास्यहिमूलकारणंतद्धानमेवात्रविधौविधीयते ॥ विद्यैवतन्नाशविधौपटीयसी नकर्मतज्जंसविरोधमीरितम् ॥ ९ ॥

अज्ञानमिति ॥ अत्रविद्यौयस्संसारकानि वृत्तिकोविधान साधनजोज्ञानछ सोमूल अज्ञानकोनाशकोकारणछ मूलअज्ञानकोनाशहुँनाले संसार चक्र देखिनछुट्छ किनभने अज्ञानलेसंसारचक्रकोउत्पत्तिहुन्छएस्तो २ वेदमापनिभनेकोछ, "आज्ञानात्प्रभवंसर्वम्" इति श्रुतेःनित्यनैमित्तिकप्रायश्चित्तादिकर्म र यज्ञदानउपासना आदि अनेकप्रकारका शुद्धकर्मले अज्ञानकोनाशशास्त्रले कहेकोछभनेतिमिज्ञानले मात्र अज्ञानको नाशहुन्छ भन्यौ भनि भनौलाप्रविद्याजोछ सोमूलअज्ञानको नाशगर्ने सामर्थ्यछजस्तै श्रीसूर्यकातेज अन्धकारलाई नाशगर्ने सामर्थछकिनभने तत्रभनेकोअज्ञान जन्यजगत्ले आज्ञान जन्यकोविरोधि हुँदैन अर्थात्जोजस्देखिउत्पन्नहुन्छसोतेस्काविरोधिहुँ

T

देनतात्पर्य यो आत्मास्वरूपको अज्ञानले गरिकनदेहको अभिमानरूप अभ्यासभनेको भ्रमलेगरिकनपुरुषकोधर्म अधर्मविषयप्रवृत्ति हुन्छ तेस्लेफेरि अज्ञानको अधिकबृद्धिहुन्छ येस्कारणले अज्ञान जन्यकर्म र कर्म जन्य अज्ञान छ तेस् कर्मले अज्ञानकोनाश हुँदैन अविरोधि हुनाजे यस्कारणले कर्म अज्ञान को नाशगर्नें समर्थ छैन जस्तै अन्धकारले अन्धकारको नाश गर्न सक्दैन जस्तै बिच्छी माकुरो आपुसमा उत्पत्ति भै बिनाश वाला हुन्छ तस्तै कर्म जन्य अज्ञान पनि कर्मले र अज्ञान जन्य कर्म परस्पर विरोध हुँदैनन् उल्टा प्राप्तवाला हुन्छ तेस्कारणले जो जस्को विरोधि हुन्न सो तेस्को नाश गर्न सक्दैन जो जस्को विरोधि हुन्छ तेस्को नाश

गर्छ जस्तै सर्पन्याउरि मुसोबिरालो गाई बाघ देवता दैत्य इ स्वाभाविक परस्पर विरोधिछन अर्थात् स्वभाविक इन्को विरोधि छ येस्यकारणले तिन्मा नाश गर्ने सामर्थ्य पनि छ तस्तै ज्ञान र अज्ञानको स्वभाव विरोध छ जस्तै तेज् अन्धकारको नाश गर्नामा समर्थ छ जो स्वाभाविक विरोध वाला हुन्न सो अर्काको नाश गर्न सक्दैन

नाज्ञानहानिर्नच रागसंक्षयोभवे त्ततः कर्म सदोष मुद्भवेत् । ततः पुनः संस्मृति रप्यवारिता तस्माद्बुधोज्ञान विचारवान्भवेत् ॥ १० ॥

नाज्ञानेति । कर्म र अज्ञानको विरोध न हुँनाले कर्मगरिकन अज्ञानको नाश हुँदैन

T

संसार विष बन्ध रूप जोराग द्वेषादि सोपनी कर्मले नाश हुँदैन कर्म उपासनाको जो छ फल स्वर्ग नरक धन पुत्र स्त्री आदि यो सम्पूर्ण नाशवन्त हुँनाले कर्म उपासनाको दोषीपनी शास्त्रले भनेकोछ तेस्कारणले दोष वालाहो अबराग द्वेषादि युक्तकर्म गर्ने वाला हरूलाई श्रुति अक्षय अर्थात् क्षयरहित् फललाई गर्छजोपुरुष चतुर्मास आदि यज्ञ गर्छ सोसुकृतहुन्छ अर्थात् स्वर्ग रूप मोक्ष त्योपुरुषलाइ हुंछ अक्षय्यवै चातुर्मास्ययाजिनः सुकृतं भवति योबेदमाभनेकोछभनेति मिकर्मको फल नासमानकसरि भंछौतेस्कारणले तिमिले भनेको युक्तहो भनिभनौलाहे भाई ! वेदकोतात्पर्य यो होइन कर्मउपासनाको फल स्वर्गादि भोगनासरहित मोक्ष रूप

होयो वेदकोतात्पर्यसुनि भंछन्वेदकोतात्पर्य योहोवेदविरुद्धमार विषे प्रवृत्तजो पुरुषछं तिलाई स्वर्गरूप मोक्षको फललाई सुनाई अधर्ममार्गको निवृत्तिगरून् अर्थात् अधर्म छोडुन्भन्नाका निमित्त हो अधर्मले नर्कादिदुःखहुन्छ तेस्कारणले स्वर्ग मुक्ति ठान्छन् जस्तै "पञ्च पञ्च नखा भक्षा" पांचनख वालो जिव खानु श्रेष्ठछ भन्ने तरपांचनख वालो ग्रामसुंघुर निषिद्ध पनि गरेको छ वेदका अर्थको तात्पर्य माही कर्मले गरेको जोफलछ सो नाना प्रकारका भोग तेस्ले गरिकन गर्भवासनादिदुःख पनी अवश्य हुंछ मुक्तिकोआशा ता दुर्लभैछ तेस्कारणले जान्नेवालाहरु निश्चय संपूर्ण कर्मलाई त्याग गर्छन् ॥ १० ॥

ननु क्रिया वेदमुखेन चोदिताय

थैवविद्या पुरुषार्थ साधनम् । कर्तव्यता प्राणभृतः प्रचोदिता विद्या सहायत्वमुपैति सा पुनः ॥ ११ ॥

ननु इति । शंकासमुच्चयवादिहरू जस्तै मुख्यगरिकन वेद अर्थात् श्रुति स्मृति पुराणहरुमा पुरुषार्थ अर्थात् मुक्तिकोसाधनविद्याज्ञानलाई भनेकोछ "ब्रह्मविदाप्नोति परं ब्रह्मविद्ब्रह्मैव भवति ।" इत्यादि श्रुतिको यो अर्थ ब्रह्मवेत्ता परभनेको परमात्मालाई पाउँछ । ब्रह्मजान्ने नै ब्रह्म हुन्छ कर्मरज्ञानले गरिकन पनि ब्रह्मको प्राप्तिवेदले भनेकोछ जस्तै आकाशमा २ पखेटालेगरिकन पंक्षिउड्दछन तस्तै कर्मरज्ञानले मुक्तिपनि प्राप्तहुन्छ यस्कारणले यो जानिन्छ किकर्म

पनिमुक्तिको साधनहो भनि वेदले भनेकोछ तथैव "ज्ञानकर्मभ्यां प्राप्यते ब्रह्मकेवलम्" इति श्रुतेः। यस्ले यो सिद्धभयो केभने जो अवश्य गर्नु कर्तव्यताछ तेस्लाई श्रुतिप्रति पादन गर्छे हेर जो अवश्य कर्तव्यता छ तेस्लाई नगरे देखीन् पाप लाग्छ यस्तो पनि श्रुतिभन्दछे जस्तै नित्य नैमित्तिकस्नान सन्ध्या आदि नगरे देखि पाप लाग्छ तेस्ले पुरुषलाई ज्ञानको उत्पत्ती हुँदैन जस्तै घडा को उत्पतिमाटो दंडचक्र धागोआदि कुह्माले को सहायक छ ई नभैकन घडा हांडी पुरुवा वन्न सक्दैन तस्तैकर्म उपासना पनि ज्ञान को सहायक् हुन् त्यो कर्म न भये ज्ञानको सिद्धि हुँदैन यो पनि सिद्धभयो अर्थात् कर्म उपासना ज्ञानको सहायहुनाले अवश्य कर्म

गर्नु पर्छ इति ॥ ११ ॥

कर्माकृतौ दोष मपि श्रुति र्जगौत स्मात्सदा कायमिदं मुमुक्षुणा । ननु स्वतंत्रा ध्रुव कार्य कारिणी विद्यान किंचिन्मनसाऽप्यपेक्षते ॥ १२ ॥

कर्माकृतौइति । श्रुतिभन्दछे जो पुरुष अग्नि होत्रादि कर्मलाई त्यागछ तेस्कारणले जब संम योमाण छ तवसंम अग्निहोत्रादि कर्म गर्नु यसप्रकारले कर्मगरेन भनेंश्रुतिले तेस्पुरुष् कन दोष्प्रातिपादनगर्छे "वीरंहावाएषदेवानां योग्निमुद्वासयते । यावज्जीवमग्निहोत्रंजुहो ति इतिश्रुतेः । शंका सिद्धान्तको ध्रुव अचल अर्थात् स्वर्ग नरक जन्म मृत्यु बिषे गमन आगमन रूपलाई जान्नेरिरिश्वतंत्रछआकांका

सहायता विनाआफ्नु जोकार्य अर्थात् मुक्ति तेस्लाइ पाउनु अतिसमर्थछ जस्तै तेज अर्थात्प्रकाश तेस्को अन्धकारलाई आर्काकोसहायतान लिकन नाश गर्ने सामर्थछ अर्काको सहायता रत्तिभर पनि इच्छा गर्दैन तेस्तैविद्या पनि आफ्नु फल उत्पतिगर्नालाइ आर्काकोकिञ्चित्पनि सहायताको इच्छा गर्दैन अनुमानलेपनि विद्या आफनु फलउत्पति गर्नामा आर्काका सहायको इच्छा गर्दैन किनभनेस्वतंत्र छ इच्छा परतन्त्र वालालाई हुन्छ जस्तै सूर्य अन्धकारलाई नाशगर्न स्वतन्त्र छ यस्कारणले यो सिद्धभो कि विद्या अविद्यालाई नाश गर्न समर्थ छ श्वतन्त्र हुँनाले अविद्याजो छ अज्ञान सो बाध्यमान छ श्वतन्त्र नहुँनाले घडा पुरूवा झैं नाश हुन्छ ॥ १२ ॥

न सत्यकार्योऽपिहि यद्वदध्वरः
प्रकांक्षते न्यानपि कारकादिकान्
तथैव विद्या विधितः प्रकाशितै र्वि
शिष्यते कर्म भिरेव मुक्तये ॥ १३ ॥

न सत्य इति । योतिमिले कहनु अयुक्तछ कसरि श्रुति कहन्छ किचातुर्मास आदियज्ञ गरनेवाला जो छन् सुकृति भनेको पुण्यवान् पुरुषको अक्षय अर्थात् नाशरहित फलकन प्राप्त हुन्छ । सत्य कार्यो अक्षय्यं हवै चातु र्मास्ययाजिनः सुकृतं भंवतीतिश्रुति यस्प्रकार वेद प्रतिपादित नाश रहित यज्ञादि कर्मको फल तेस्लाई तिमी नाशमान कसरी भन्छौ

केचिद्वदन्तीति वितर्क वादिन
स्तदप्यसद्दृष्ट विरोधकारणात्

यस्कारण तिम्रो कहनु असत्यछ अरु अनुमान गरिकन पनि देखिन्छ जस्तै अनेक प्रकारको जोछ सो कर्म गर्नेवाला को सहायता ले क्रियाको सिद्ध हुन्छ तस्तै विद्यापनि अनेक प्रकारका अग्नि होत्रादिक जोछन् कर्म तिनका सहायताले गरिकन मुक्ति संपादक विषय मा समर्थ हुन्छ तस्मात् यो सिद्ध भयो कि विद्या जयति फल सिद्धिका निमित्त कर्मको अवश्य अङ्गिकार गर्नू चाहिन्छ यस्को अभिप्राय यज्ञ लाई अरु सामग्रि जस्तै चाहिन्छ तस्तै ज्ञान लाई पनि कर्म चाहिछन् भन्छन् ॥ १३ ॥

देहाभिमानादभि वर्धते क्रिया
विद्या गताहं कृतितः प्रसिद्धयति ॥

केचित् इति । कोहि एक वितर्कवादिभने को मिथ्यवाद गर्ने वाला अर्थात् ज्ञान अरू कर्म ई दुइले गरिकन मुक्तिको साधन गर्ने वाला मिथ्या छ कसरी जस्तै केवल कर्मले मुक्ति को जतन गर्नु मिथ्या छ तस्तै ज्ञान कर्म दुई मिलेर पनि मुक्तिको साधन मिथ्यै छ केकारणले मिथ्या छ त भनौला सुन दृष्टि विरोध कारणात् भने को लोकको प्रत्यक्षदृष्टि विरोध हुँनाले दुवै असत्यछ सोहि भन्छन् दृढदेहका अभिमान ले क्रियाको वृद्धि हुन्छ यस्को तात्पर्य हो कि जुन् जुन कर्मगर्छ त्यो त्यो अधिक अधिक अभिमान् बढ्दछ अरू अनात्म माने जड् पदार्थ देह इन्द्रिय बादि तिन्को तद्रूपता अर्थात् देह अरू आत्माको एकता रूप

अभिमानले गरिकनै क्रियाको वृद्धिहुन्छ अरू विद्या जो ज्ञान तेस्ले जड अरू चैतन्यको जोछ एकतारूप तेस्ले गरिकनहुँने देहको अहंकार जिवाकार मनुष्यहुँ भन्नेयस् भ्रमको नाशहुन्छ अर्थ योहोकि देहाभिमानि हुन्न कर्मले भयाका ज्ञानले कर्मैको उत्पत्ति हुन्छ कर्म रहित भै अहंकार जादैन अहंकार न गै ज्ञानहुन्न ॥

विशुद्धविज्ञानविरोचनाश्चितावित्या-त्मवृत्तिश्चरमेतिभणयते उदेतिकर्मा-खिलकारकादिभिर्निहन्ति विद्याऽखि-लकारकादिकम् ॥

आत्म विद्याको स्वरूप कहन्छन् बिशुद्ध इति बिशुद्ध ज्ञानभनेको साक्षात कारजुन

वेदांत वाक्यको बिशेषबिचार अर्थात् जीव ब्रह्म को एकता वास्तव शुद्धचैतन्य निर्विकार अधिष्टानकटस्थ आत्मस्वरूपब्रह्मको अभेदरूप को सिद्धितेस्को बिचारगरेर प्राप्तभएको यस्तो जोचरमभनेको अन्तिम आत्मवृत्तिसो अन्तः करण अर्थात् चित्तको अखण्ड ब्रह्माकारवृत्ति संसय विषय रहित साक्षात्कार तेस्लाई विबेक बिद्याभन्छन् अरू समुच्चयवादिको निषेधगर्नालाई फेरि पनी विद्या र कर्मको विषमता कहन्छन् उदेतीति यज्ञादि जो कर्म छ सो अनेक प्रकारको कारक क्रियाका अङ्ग तेस्ले रहित कर्म फलदीन समर्थ छ अरू बिद्या जो छ ज्ञान सो सम्पूर्ण कारक को हननगर्छ यस्को यो अर्थ कर्तृत्व भोक्तृत्व रागद्वेष आदि लिएर जो बुद्धिको

धर्म छ तेस्को नाश गरी जनको परमपद विषे प्राप्त गर्छ तात्पर्य योकि सम्पूर्ण व्यवहारत्यागेर शुद्ध चैतन्यसाक्षि ब्रह्म विषय बुद्धिको स्थिति हुँनाले विद्याको समाप्ति हुन्छ सो विद्या चित्तको शुद्धिद्वारा सिद्धि हुन्छ कसरि जुन् पुरुषको चित्त शुद्धिछैन तेस्लाइ वैराग्य हुन्न तेस्को विषयमा बासना दूर हुन्न यस्कारणले चित्त शुद्धिका निमित्त कर्म गर्नु युक्त छ कर्म उपासना अवश्य कर्तव्य छ अरू मुक्ति रूप फल प्राप्तिका निमित्तको इच्छा उल्टा ज्ञानको विनाश हुँनामा कारण छ यस् प्रकारले पूर्वपक्षको सिद्धान्त बढिया प्रकारले खण्डनभो जस्तै परदेशि पुरुष आफ्नू देश जाना निमित्त बाटामा बाघ चोर हरूका डरले जङ्गल पार

T

हुँना खातिर सहायताको इच्छा गर्छन् तस्तै विद्या जो ज्ञानभो सन्सार रूपि बनमा पार हुँन सहायताको इच्छा गर्दैनकिन स्वतन्त्रछ

तस्मात्त्यजेत्कार्यमशेषतःसुधार्विद्याविरोधान्नसमुच्चयो भवेत् आत्मानुसन्धान परायणः सदा निवृत्त सर्वेन्द्रियवृत्तिगोचरः ॥

यस्कारणले विद्याका साथ कर्मको विरोध हुँनाले समुच्चयवाद यथार्थ हुँदैन उल्टोविरोध हुन्छ अब पहिले भनेको दोष संक्षिप्तानुसार मुमुक्षु सम्पूर्ण कर्मलाई त्याग गरून् कामना रूप कर्मलाई ता अवश्यै त्यागगर्नु नित्यनैमित्तिकादि जब सम्म चित्त शुद्ध हुन्न

तब सम्म निष्कामना ईश्वरार्पण गर्नू जब सम्म ब्रह्म विचारमा चित्त स्थिर हुँदैन तब सम्म सत्वगुणीले शुभ कर्मलाई न छोड्नु किनभने चित्तको अशुद्धता तेही जगतको कारण्हो तेस्कारणले अवश्य शुभ कर्म गर्नु तर चित्त शुद्धि भए पछि तेस् कर्म लाई पनी अवश्य त्याग गर्नु जस्तै इनार तलाउ खन्ना निमित्त कोदालो आदि हतियार चाहिन्छ पानी निस्केपछि कोदालो त्याग्छन् जस्तै काँढो शरीरमा बिझ्यो भने आर्को काँढो लिबिझेको काँढो झिक्छन् र त्यो काँढो पनी आफलछन् तस्तै जान्नु। अब मुक्तिको इच्छा हुँने पुरुषले गर्ने कुरो कहिन्छ सम्पूर्ण इन्द्रियको स्पर्शादि विषयछ तेस्लाई मनले छोडिकन सत्‌चित आनन्द

रूप आत्मालाई जस्ता प्रकारले पाइन्छ सो उपाय गर्नु निरन्तर ब्रह्मको अभ्यासै मा मग्न पर्नु अर्थात् सम्पूर्ण बासनालाई त्यागगरी यो चित्त जसरि ब्रह्माकार हुन्छ सोई निरन्तर विचार गर्नु प्राणायामादि गरि जस्ता प्रकारले चित्त रोकिन्छ सोई प्रकारगरी चित्त अर्थात् मन् रोकनु किनभने मनलाई रोकनु एही पुरुषको अन्तर्मुखवृत्तिहुन्छ मन को वाह्यवृत्ति सो ता जगत्को मूलकारणहो त्यै अनर्थको हेतु हो ॥ १६ ॥

यावच्छरीरादिषु माययाऽऽत्मधी-
स्तावद्विधेयो विधिवाद कर्मणाम् ।
नेतीतिवाक्यैरखिलं निषिद्ध्यतज्ज्ञा-
त्वापरात्मानमथत्यजेत्क्रियाः ॥१७॥

यावदिति अज्ञानकृत यो देह इन्द्रिय आदि जड़ पदार्थ तिन्मा जबसंम आत्माधि भनेको आत्मबुद्धि छ अर्थात् म मनुष्यहुँम ब्राह्मण हुँ मशूद्रहूँ इत्यादि कर्ताभोक्ता पनो जब सम्मदृढव्यवहाररूपभ्रमछ तबसंम विधि वाद कर्मणा भनेको वेदले कहिएको नित्य नैमित्तिकादिकर्मको अधिकारी छ, वेदले निषेध गरेको हिंसादिकर्म अर्थात् अनाचार नरक जानेवाटो तेस्लाई न गरोस्। भ्रमसि द्धिजोदेह इन्द्रियादिमा अनात्म बुद्धि दृढ हुनाले सम्पूर्ण नामरूप जगतलाइ नेतिनेति श्रुति वाक्यको उपदेशले गरिकन सम्पूर्ण जगत्लाई निषेध गरोस्॥ एक इति भनी कन नाम आकों इति भनेको निषेध अर्थात् योनाम पनो साँचो होइन योरूप पनोसाँचो

T

होइन अथवा यो अर्थगरे १ इतिको अर्थ कार्य दोश्रोइति को अर्थकारण न भनेको निषेध अर्थात् कार्य कारण पनि होइन यस्मा प्रमाण यो कार्योपाधिरयं जीवःकारणो पाधिरीश्वरः ॥ कार्य कारणतां हित्वा पूर्ण बोधोऽवशिष्यते इत्यादिश्रुतेः यस्प्रकारानिषेध गरिकन तिन्को अधिष्ठान साक्षि चैतन्नय कुटस्थ एक स्वभाव वाला अद्वितिय ब्रह्मनाना प्रकारको जो छ सोदेह इन्द्रीय प्राण अन्तः करणादि भूतभौतिकसो संपूर्ण त्रिगुणोमाया को परिणाम रूप मिथ्याछ संपूर्ण निषेधको साक्षी शेषपरमात्मा महूँ तेस् पुरुषलाई कर्म को अधिकार कौनै प्रमाणले छैन अर्थात् आदेशोनेति ॥ एकं ब्रह्मैवाद्वितियं नेह नानास्तिकिंचन ॥ इत्यादिश्रुतेः ॥ १७ ॥

यदामरामत्मात्मवि भेदभेदकं वि
ज्ञान मात्मन्यव भाति भास्वरम्
तदैवमाया प्रविलि यतेऽञ्जसास
कार काकारण मात्मसंसृतेः ॥१८॥

अब आत्मज्ञान भयेपछी अविद्या अवश्य निवृत्तहुन्छ योप्रतिपादन गर्छन यदाइति हेलक्ष्मण ! जुन् अवस्थामा शुद्ध अन्तःकरण विषे ईश्वर जीव ईदुईलाई भेदगराउँने वाला जो मायर अन्तःकरणरूप ईदुई उपाधि ते स्कोनाश गर्नेवाला प्रकाश स्वभाव विज्ञान अर्थात् सववृति हरूलाई मर्दन गर्नेवालो ब्रह्मा कार अखण्ड वृत्तिप्रकाशगर्छ तबजन्मान्तर पाप कर्मले सँग आफ्नु संसृतिको कारण जो माया अर्थात् जीवोपाधिभूत अज्ञान

T

त्यो अज्ञानको नाश हुन्छ जस्तै अन्तःकरण अज्ञानको नाश हुंछ जस्तै सूर्य उदय भये पछी अन्धकार नाश हुँछ तस्तै अन्तःकरण का ब्रह्मको र वृत्ति उदयमा सन्सार रूप अज्ञान जन्य अन्धकारको नाश हुँछ । १८ ॥

श्रुति प्रमाणाभिविनाशिताचसाक थंभविष्यत्यपि कार्यकारिणी। विज्ञा-नमात्रादमलाद्धितीयस्त स्मादविद्या न पुनर्भविष्यात ॥

श्रुति इति । तत्वमसि इत्यदि श्रुतिरूप प्रमाण ज्ञानले गरिकन नाश भयेको जो अज्ञान सो प्रबल प्रमाण बिना फेरि कसरि उत्पन्न होला श्रुतिदेखि व्यतिरिक्त दोस्रो अर्को प्रबल प्रमाण छैन तेस्कारणले वेदका

प्रमाण ज्ञानले नाश भयाको अज्ञान फिरि उत्पत्ति हुनसक्दैन यो निश्चय जान जस्तै भूटेको अन्नरोपे रउमरदैन तस्तै नष्ट भयाको माया अर्थात् अज्ञान त्यो पनि असत् अज्ञान सन्सारको उत्पत्ति गर्न समर्थ हुँदैन किन फिरि तेस्को उत्पत्ति हुँदैन भनि भनौला हे लक्ष्मण ॥ विज्ञान मात्रम् इति ॥ शुद्ध अद्वितीय आत्मविषयक ज्ञान मात्रले अर्थात् लक्षस्वरूप अद्वितीय चैतन्य कूट स्थसाक्षि आफ्नु स्वरूप लाइजाने पछि निधिध्यासन समाधि प्राणायामादि गरिकन परिपक्वभयाको अर्थात् संशय विपर्ययले रहित भयाको दृढ निश्चय ज्ञानले नष्ट भयाको जो अज्ञान सो फेरी कसरि सरीर उत्पत्ति होला अर्थात् उत्पत्ति हुँदैन जस्तै डोरिलाई

अज्ञान ले सर्प भन्ठान्छ त्यो डोरि हो भन्ने ज्ञान भए पछि सर्प भनि डराउने अज्ञान रहदैन ॥ १६ ॥

यदिस्मनष्टान पुनः प्रसूयते कर्त्ताऽहमस्येतिमतिःकथं भवेत् । तस्मात्स्वतन्त्रान्नकिमप्यपेक्षते विद्याविमोक्षायविभानिकेवला ॥

केवल ज्ञानले मुक्ति हुन्छ कर्मउपासना को प्रयोजन छैन भनि कहिन्छ। यदि तो जब बलवान् प्रमाणले तत्व ज्ञान भये पछि नष्ट भयाको मायाले संसारको उत्पत्ति गर्न समर्थ छैन जस्तै जिउदो मुसालेरा विरालो मार्न सक्नैन भने मरेको मुसाले कसरि मार्ला यो के प्रमाण हो कौन भने कारण

का अभावले कार्यको अभाव आफै हुन्छ तस्तै अज्ञानको एकबार अभाव हुँनाले गरि अन्धकारको बृद्धि केही प्रमाणले पनी उत्पन्न हुन सक्तैन अर्थात् ब्रह्मानन्द का सुख एक बार अनुभव भए पछि फेरि सन्सारको दुःखमा मनुष्य सुखिछु दुःखिछु भन्ने हुँदैन जस्तै अमृत् खाएर तृप्त भया को पुरुष फेरि कुकुरको जूठो अन्नमा इच्छा गर्दैन अहंकार गयेपछि कर्मको अभाव हुंछ धर्मअधर्म रूपकर्मको अभावले जन्मम्रृत्यु हुदैन त्योन भयेपछि दुःखहुदैन यस्कारणले ज्ञानस्वतंत्र छ कर्म उपासनाको केहि प्रयोजनछैन अद्वैतहुनाले केवल सहायविनाविद्या आफ्नु मुक्तिरूप फल तेस्लाई प्राप्ति गर्न आफै समर्थ छ ॥ २० ॥

सातैत्तिरीय श्रुतिराह सादरंन्यासं
प्रशस्ताखिलकर्मणांस्फुटम् । एता-
वदित्याह च वाजिनाश्रु तिर्ज्ञानं वि-
मोक्षाय न कर्म साधनम् ॥२१॥

हे लक्ष्मण ! यस् अर्थमा श्रुतिस्मृतिपनीप्र
माणछ सातैत्तिरीय इति प्रसिद्ध यजुर्वेदका
तैत्तिरीयसाखाले आदरपूर्वक कर्मको त्याग ग
रेको । नकर्मणानपूजयाधनेन त्यागेनैकेना
मृतत्वमानशुः परेणनाकं निहितं गुहायांवि
भ्राजतेयद्यतयोविशंति इति श्रुतः यस्को
अर्थ अग्निहोत्रादि कर्मले पूजा पाठले
धन पुत्र कलत्रइत्यादि सन्सार सम्बन्धि
भोगले मुक्ति हुदैन किनभने सब लौकिक
वैदिक कर्मको त्याग गर्नैं कोही अन्तर मुख

पुरुष अमृतत्व मोक्ष लाई पाउँछ जुन अमृतत्वमा इन्द्रिय हरू लाई वश गर्ने वाला संन्यासिहरू प्रवेस गर्छन् सो अमृतत्व स्वर्ग भन्दा पनि श्रेष्ठ छ जो आफ्नु एकाग्र बुद्धि रूप गुफामा बसेर तत्व प्रकाश मान अन्तर मुख पुरुषहरू मात्र जान्दछन् यो श्रुतिकर्मसमुच्चय गर्नु भंदछन । एताव दरे खल्वमृतत्वम् ॥ इत्यादि वाजसनेयशाखाको वेदपनि ज्ञानले मोक्षको साधन्छकमले हुदैन इत्यर्थ ॥ २१ ॥

विद्या समत्वेन तुदर्शि तस्त्वयाक्रतुर्न दृष्टान्त उदाहृतः समः । फलैः पृथक्त्वाद्बहुकारकैः क्रतुः संसाध्यते ज्ञानमतो विपर्ययम् ॥ २२ ॥

विद्यइति । हेलक्ष्मण ! समुच्चयवादिहरू अ
ग्निष्टोमादियज्ञ तेस्ले विद्याको समता अनु
मानगरि सिद्धगर्छन् तर येस्मा सम्मतीको
दृष्टान्त दिनसक्दैनन् तेस्कारणले त्यो झुटो
किनभने फलैः पृथक्त्वात् यज्ञकारे विद्या
को फल भेदछ जस्तो चक्र दंडसूत्र इत्यादि
घटको उत्पत्ति रूपयेकै फलछ तस्तै कर्म
र ज्ञानको पनि येकै फलछ भनिभन्छन्
त्योहोइसक्दैन किनभने कर्मको जोफल स्व
र्गनर्क धन पुत्र, स्त्रीआदि सपूर्ण संसारभो
ग सबनाश हुन्छ किनभने अनित्य हुँनाले
अर्थात् भोगनाले फलनष्ट हुन्छ ज्ञानको
फल जो मुक्ति सो ता कस्तै प्रकारले पनि
नाशहुन सक्दैन यो सम्पूर्ण शास्त्रको सि
द्धांतछ जुन् यज्ञादि कर्म छन् सो अहंकार

ममता अभिमान कर्ता क्रिया इ देशका लका नियमले गरिकन शाधन सिद्ध हुँछ ज्ञान जो छ सोता अहंकार ममता क्रिया कर्म कर्त्ता देश कालको अभाव रूप साध नले सिद्धहुँछ येस्कारणले कौनै प्रकारले पनिकर्मर ज्ञानको समता हुँदैन ॥

सप्रत्य वायोह्य हमित्यनात्म धीर ज्ञप्रासद्धा ततु तत्वदर्शिनः । तस्मा दूबुधैस्त्याज्यमपि क्रियामभिर्वि धानयः कर्म विधि प्रकाशितम् २३

शास्त्रमा कहेको नित्यनैमित्तिका संध्योपास नासो न गरे पापलग्छ भनिवेदमा पनि भनेकोछ कर्म अवश्य गर्नुपर्छ भनिकोहि भन्द छन् हेलक्ष्मण श्रुतिको तात्पर्ययो हाइनसमस्त-

वाये इति ॥ जोपुरुष निर्विकार साक्षि चैतन्य आत्मामा अनात्मकधर्म जोदेह इन्द्रियमन बुद्धि चित्त अहंकारदेखिलिकन आश्रयगर्छन् येस्ता-अज्ञानि विवेकभ्रष्ट मूर्खहरूकर्मलाईछोडेअव श्यलोपहुँछभनि भन्दछन्स्वर्गनरक भोगगर्नेयो जिवकसरीईश्वर कोममतागरुकेकर्मछोडिश्रेष्ठ हुँ हामिले कर्मगर्नुपर्छ किन भने कर्मैसितमो क्षप्रीतिहुन्छ यस्कारणके कर्मगर्नुयोग्यछजन कराजा हरूपनिकर्मगरिकनमुक्ति भएहामिगृ हस्थहु हाम्रोकर्म श्रेष्ठहो ज्ञानसंगहाम्रोकेहि वास्ताछैन भन्ने मूर्खहरूकोजोसिद्धान्तछसोवि षयासक्तकामिहरु नानाप्रकारको भोगतृष्णा छोडन नसकिजेमन्पर्‍यो सोवक्छन् तत्वदर्शी आत्मतत्वको विवेकगर्नेवाला अर्थात इंद्रियादि जडवदार्थको साक्षि कूटस्थ अधिष्ठानचैत

न्यआत्मा ई देखीभिन्नछ यस्तोआत्मस्वरूप
लाइजान्नेहरू वक्वादगर्दैनन् किनभनेपापपु
एयादिसुख दुःखवर्णव्यवहार संपूर्णस्थूलसू
क्ष्मशरीरकोधर्महोस इन्कोसर्व प्रकाशकशा
क्षि अधिष्ठान् इन्देखीभिन्नछु येनिश्चयको
नामब्रह्मबोधहोयसकोनामआत्मतत्व विवेक
हो येब्रह्मविद्या हो येसाक्षात्कार जीवन्मु
क्तअवस्थाहो तेस्तोवीचारगरि तत्ववेत्ताहरू
भोगकोइच्छालेदेहाभिमाननाश हुनेकर्मको
फलकोइच्छागर्दैनन्सोदेह अहंकारलेरहित
पुण्यपापको डरनभएकोबुद्ध जोविवेकी त्यो
कर्मलाई अवश्य त्यागगर्छ ॥ २३ ॥

श्रद्धा न्वितस्तत्व म सीति वाक्य
तोगुरोः प्रसादादपि शुद्ध मानसः ।

विज्ञायचैकात्म्य मथात्मजीवयो ।
सुखी भवेन्मेरुरिवप्रकंपनः ॥ २४ ॥

अब तीक्ष्णवैरागवाला आत्मवेत्ताविवेकि तिन्लेगर्नुपर्ने कुरोकहिंन्छश्रद्धाइति ॥ हेलक्ष्म ण निष्कामकोकर्मगर्नाले शुद्धभयाकोछ अन्तःकरण जस्का यस्तापुरुषजोछसोगुरुका प्रसादले प्राप्तभयाको त त्वमसिइत्यादिवाक्य श्रवणगरिकन आत्मापरमात्मा लाइय कतारुपमोक्षसाधन कोज्ञानतेस्लायी बढिया तन्हलेजानिमनन निदिध्यासन गरेरपरिपक्व अर्थात् संसय विपर्ययदेखि रहितदृढज्ञा नभयाको पुरुष आत्मालाई साक्षात्कारजा- निकनजीवन्मुक्तरूप परमानन्द सुखस्वरूप भैकन सुमेरुपर्वतझैं अचल अर्थात्विषया भिलाष मामनगर्दैन सुखपूर्वक रहंछ ॥२४॥

आदौ पदार्थावगतिर्हिकारणंवा
क्यार्थ विज्ञान विधौ विधानतःतत्वं
पदार्थौ परमात्मजीवकावसीतिचैका
त्म्यमथानयोंभवेत् ॥ २५ ॥

अत्रमहावाक्यका अर्थकोविचारगर्नेवाक्य
का पदको अर्थक्रमलेभनिछ आदौइतिशम-
दमादि साधन संयुक्तअधिकारिशुद्ध अंतः
करण अर्थात् रागद्वेषादि विक्षेपरुप्रमाद
रहितवाक्यको अर्थकोज्ञानलाईपदार्थकोज्ञा-
नजान्नुप्रथममुख्य कारणछ प्रमप्रमादचि-
त्तवाला पुरुषहरुमहावाक्यको अर्थकोविचार-
गर्ने अधिकारि छैन अज्ञश्चाश्रद्धश्च।नश्चसंश-
यात्माविनश्यति ॥ यस्कारणलेपैल्हेपदार्थ
ग्यान महा वाक्यका अर्थकोमूलकारणछ

पैल्हे पदार्थभनिंछ तत्त्वमसि योतीनपंदछ तत् १ त्वं २ असि ३ योतीनपदकोअर्थ येरैछ संक्षेपलेतत्कोअर्थ सर्वज्ञत्वादि गुणयुक्त परमात्मा त्वंको अर्थ किंचित् ज्ञत्वादिगुणयुक्तजीवात्मा इदुवैतत्वपदको अभेदबोधक अर्थात्जीवात्मा परमात्माइ दुइयकैहोभन्नेजान्नुयो असिपदको अर्थहो यस्तोयो पदार्थग्यान हो ॥ २५ ॥

प्रत्यक् परोक्षादि विरोध मात्मनोर्विहाय संगृह्यतयोश्चिदात्मताम् । संशोधितां लक्षणया च लक्षितां ज्ञात्वा स्वमात्मानमथा द्वयो भवेत् ॥२६॥

सर्वज्ञता आदि गुणले युक्त जो ईश्वर र अल्पज्ञता आदि धर्मवाला जीव छ सो

एक ता भन्नु अति विरोध छ जस्तै भिंगा र हातिको एकता विरोध छ तस्तै सर्वज्ञ ईश्वर अल्पज्ञ जिवको एकता कसरी हुन्छ भनि भन्छन् प्रत्यक् इति ॥ हे लक्ष्मण (प्रत्यक्) भनेको अहंबुद्धि अर्थात् म मनुष्य हूँ भन्ने अल्पज्ञ तादि जो जीवको धर्म र (अपरोक्ष) भनेको सर्वज्ञादि सहित जो ईश्वर को धर्म छ सो प्रत्यक्ष विरोध वालाजीव र परमात्मा तिन्को विरोधता लाई त्यागगरिकन संशोधिता भनेको जुक्तिले तत्पदर त्वंपदको अर्थ लाई विचार गर्नु तेस विचारले तद्पदरत्वं पदको अर्थ को अभेद छ अर्थात् शुद्ध चेतनामा विरोध केहि छैन तेस्को एकता ग्रहण गर्नु त्यो बिचारको युक्ति भन्दछु पैल्हे शक्ति को लक्षण सुन जुन पदको श्रवण मात्रले

तेस्को अर्थ जान्ने जो सामर्थ्य छ तेस
सामर्थ्यको नाम शक्ति हो जस्तै घट पट
लाई सुन्नै वित्तिकै घडाको स्वरूप जानिंछ
घडाको नाम सुन्ने मात्र घडाको स्वरूप
जान्नुयोशक्तिभन्निन्छ योवेदान्तको सिद्धान्त
छजस्तै अग्निमाजोदाहगर्नेशक्तिछसो अग्नि
कोशक्तिहोनरअहातत्पदरत्वंपदइ १ सामान्य
पदहुनविशेषिभनेकोपदविषे अर्थकोबोधकता
शक्तिहुन्छजस्तैघटपटइत्यादि पदमाछनस्तै
तत्पदभन्नालेकुनैअर्थको बोधहुन सक्दैन
तत्भनेकोकेहोत्वंभनेकोकेहो यस्कारणले त
त्पदत्वंपदमाशक्तिको अभावछाकिन भनेतत्प
दजोछ ईश्वरस्वरूपको बोधकतेस्माशकेतछ
अर्थात् गुप्तछपदले पदार्थको बोध हुँदैनपरं
तुव्यवहारमा प्रत्यक्षवर्तमान् छ यस्ता प्रकार

ले सूत्रभाष्यमाशक्तिको लक्षणभने कोछव्यव हारकानिमित्तराख्छं किनभनेनाम बिनाकोई व्यवहारसिद्ध हुँदैन यस्कारण्ले सर्वव्यवहार रहितचेतनामा तत्पदजोछ ईश्वर स्वरूपको बोधकरत्वंपदजोछ जीवस्वरूपकोबोधकई २ चिदानन्द आत्मामा कल्पनाछ तेस्प्रकारको जोछबोधशक्तितस्कोशुद्ध चेतनामाअभाव छ माया सम्बन्ध चेतनामा सर्व व्यवहार संभवछ अवआहां शंकागर्छन एस्प्रकारजो तत्पदत्वं पदमाशक्तिको अभावछतबतत्वमसि इत्यादि महावाक्य जान्नेप्रकारकोई आत्मावेत्तापुरुष संग सोध अर्थात् आत्म स्वरूपलाई जान्ने वाला संगमत्वमसि इत्यादिमहावाक्यवेत्ताजो छसाक्षात्कारमहात्मा तिनसंगमहावाक्यद्वारा आत्म स्वरूपका विचार गरोस् एस्तो उपनि

षदमापनिभनेको छ शक्तिबिना जगत्माकेहि कार्यसिद्धहुँदैन यस्कारणले नाशहुँनेपदार्थको तासत्य आत्मामा अभाव छ किनभने घट पट इत्यादि नामरूप सम्पूर्ण नाश वाला तेस्को ता ब्रह्ममा अनुमान प्रमाण प्रत्यक्ष प्रमाणले वन्दछ ता पनि घटादिवत् माया कल्पित जगत्को अभावतावंदैन, कल्पित जगत्को आत्ममा अंगीकार गरेताविकारकै अभाव सिद्धिभयो विकारको अभाव हुनाले आत्माको निर्विकारतासिद्धि हुदैन निर्विकार न भये पछि मुक्ति हुँदैन मुक्ति न भयेपछि श्रुनिगुरुको उपदेश बृथा भयो तेस्कारणले यस्कोपरिहारगर ( तेस्को उत्तर ) लक्षणगरि कन आत्मस्वरूपकोग्रहण गर्नु र कल्पितझुटो जगत्लाई त्यागगर्नुकिनभने : तत् त्वं पदको

अर्थकोप्राप्ति जोरिति छ तेस्लेगरिकन आत्म
त्मस्वरूपलाई जानिक नजबत्पदत्वं पदको
एकता जुन्समयमानिश्चय हुंछतेस्समयमा
पुरुष अद्वैत आत्मस्वरूप ब्रह्महुन्छ अर्थात्नि
त्यप्राप्तसच्चिदानन्दस्वरूप आत्मा छ तेस्लाई
अज्ञानले गरिकन भ्रमलेनपायेभैठान्छ जब
मइश्वरलाई पाउँतब शोकमोहादिरहित आ
नन्दगरूँ भनि अनेक प्रकारकोकर्मगर्छु तर
आत्मज्ञान बिना ईश्वर लाइ पाउनुदुर्लभछ
आहातत्पदको २ अर्थ छ एकवाच्य पदको
अर्थ दोश्रोलक्ष्यार्थ अर्थात् वास्तवस्वरूपको
अर्थ तेस्तैत्वंपदकोपनि २ अर्थत्नमायाकोउ
पाधिसहितर सर्वज्ञतादि गुणविशेषणभाग
अर्थात् उपाधिसहित्वंपदको वाच्य अर्थ
छ ई २ पदजो बिरोध वाला सर्वज्ञता र

अज्ञानादि माया र अविद्याको विशेषण भाग तेस्लाइत्यागगर्नुर २ पदकोजोछ विशेषण भागशुद्धचैतन्यलक्ष्य तेसू लाईलिनुकिनभने वाच्य अर्थमाविरोधप्रत्यक्षपर्छ तेस्कारणले एकता तत्व निसक्दैन सूर्यअन्धकारलेझैंलक्ष अर्थयेती सवबाधारहित सिद्धहुन्छजस्तैघटा को आकाशर महाआकाशको वाच्यअर्थमा अल्पत्वरमहत्वं विरोधजानिन्छ घटरूपउपा धिलाईत्यागगर्नाले घटाकाशर महाकाशमाभे दकेहि छैनाकिनभने सर्ववाधारहितसिद्धिछ ॥

एकात्मकत्वाज्जहतीनसंभवेत्तथाऽजहल्लक्षणताविरोधतः । सोऽयपदार्थो विभागलक्षणायुज्यते ततत्व पदयोरदोषतः ॥२७॥

एकात्मकइति ॥ अबलक्षणाकाप्रसंगले लक्षणाकोस्वरूपकहिंछ वाच्यअर्थकोसम्बंध भनेकोमिजाप सोलक्षणास्वरूपहो अरुजउन अर्थ कापदकोशक्तिले ज्ञानहुन्नत्योलक्षणाले जान्नुसोलक्षणातिनप्रकारकोछ १ जहल्ल क्षणा २ अजहल्लक्षणा ३ जहताऽजहल्लक्ष णा प्रथमजहल्लक्षणाका उदाहरणभनिन्छ जहाँसंपूर्णवाच्य अर्थकोत्यागहोस्‌जस्तै "गं गायांघोष," यहागंगापदको वाच्यप्रवाहते स्माघर असंभव हुनालेगंगापदवाच्यप्रवाहरू प अर्थत्यागितिरमाघरछभन्ने प्रतितहुन्छत स्तै [ तत्वमसि ] याहाँ जहल्लक्षणासम्भव न्है सक्तैनकीतत्‌पदत्वंपदको अर्थकोएकता विवक्षित छ याहा जहल्लक्षणा मान्छौ भने चेत न्यकोपनि त्याग्‌नाकस्साखएकतायाहोजा तस्मा

T

तवाच्य अर्थ त्याग हुँनसकेनअधिक्कोसंग्र
हभो तस्लाइ अजहल्लक्षणा भन्छन्जस्तै
काकेभ्योदधिरक्षनां, भन्नाले काकदेखि अ
धिकविराले कुकुरदेखिपनि दहीकोरक्षागर्छ
वाच्यअर्थकोत्यागनगरि अधिकको संग्रहभो
सोअजहल्लक्षणातस्तै (तत्त्वमसि) योम
हावाक्यमाहुन्न कीनतत्त्वं असियि ३ पद
कोसम्पूर्णवाच्य अर्थ तेस्को त्यागहुन्नयस्कार
णले जहितलक्षणा भएन अजहतिलक्षणा
सम्पूर्णवाच्य अर्थकोग्रहणछयोमहा वाक्यमा
संपूर्णवाच्य अर्थको पनि ग्रहणहै सक्तैनय
स्कारण अजहतिलक्षणापनि भएन अबके
वलभागत्याग लक्षणा महावाक्यमाविरोध
भागकात्याग अविरोधभागको ग्रहणहुनाले
जहताजहति लक्षणाहुन्छजस्तै २ मैन्हाअधि

नेपालमागह्रना लगायाकोमोटोदेवदत्त थियो सो देवदत्त आजकाशिमा देखियो त्याँ ह्याँ सोयं थेव्रदत्त भने प्रतित हुन्छ कसरि नेपाल मा गनना लायाको मोटो थियो योता दुव लो मैलोछनि भने ताहां विशेषण जो हो गह्रना मोटो राम्रो भूतकाल यस्लाइ त्याग गरि विशेष खालि मांस पिण्डवाला देवदत्त लिइन्छ तस्तै तत्वमसि यस्महावाक्यमा पनि तत् शब्दको अर्थ माता मायोपाधि सर्वज्ञत्वादिधर्मको त्यागभयोत्वंशब्दका अर्थ माअविद्योपाधिक अल्पज्ञत्वादिधर्मकोत्याग गरिकनदुवैको विशेष्य भाग जोशुद्ध चैतन्न्य स्वरूपमात्रा तेस्को येकतागरि अङ्गीकार गर्नु ॥ २७ ॥

रसादिपञ्चीकृतभूतसंभवं भोगा

T

लयं दुखसुखादिकर्मणाम् । शरीरमाद्यन्तवदादिकर्मजं मायामयं स्थूलमूपाधिमात्मनः॥२८॥

विशेषणभागजोछ जीवकोउपाधि तेस्को त्यागगर्नें स्वरूपकहिन्छ रसादीति रसाभने की पृथिवि सो अर्थात् पृथ्वि जल तेज पवन आकाशयो जोत्र पंचीकृत पंचमहा भूत॥ पंचीकृत भनेको एक येक भूतलाइ २।२ भाग गर्नु तेस्मा येक येक अर्धको अलग अलग स्थापन गर्नु र येक येक अर्ध अर्ध भागको चार चार भाग गर्नू र आफ्नु आफ्नु अर्ध अर्ध भाग लाई छोडी दोश्रा दोश्राको जो चार चार भागत्र सो सर्व भूतको अर्ध अर्ध भागमा मिलाउनूर येक येक भूतको पाँच

पाँच भाग हुँछ तेस्को नाउँ पंचीकरण हो यो पंचीकृत पञ्चमहाँ भूत देखि उत्पत्ति जो सुख दुःखादि तेस्कोकारण जो छ शुभाशुभ अनेक प्रकारका कर्म तेता बाट उत्पत्ति भएको नाना प्रकारका सुख दुःखादि तेसभोगका भोगको आलय भनेको स्थान अर्थात् घरहो यो स्थूल शरिर भनेको देह आदि अन्त भनेको उत्पत्ति विनाश वालो छ आदि कर्मज अर्थात् पूर्व जन्ममा गरेका फलको भोग गर्ना निमित्त अवश्य जन्म हुन्छ माया मय भनेको परंपरा मायाधिकार अर्थात् मायाका विकार यो स्थूल शरीर आत्मा को स्थूल उपाधिहो उपभनेको नजिक आधि भनेको राखनुलाइ भन्छन् जस्लाई मोज्ञानहुँछ तेस्लाइ महात्मा हरू उपाधि भन्दछन् यो आत्माको प्रथम

T

उपाधिहो ॥ २८ ॥

सूक्ष्मंमनोबुद्धि दशेन्द्रियैर्युतंप्राणै
रपञ्ची कृत भूत संभवम् ॥ भोक्तुः
सुखादेरनु साधनं भवेच्छरीर मन्य
द्वि दुरात्मनो बुधाः ॥ २९ ॥

अब सूक्ष्म उपाधि कहिन्छ सूक्ष्ममिति पण्डित हरू भन्छं कि अन्यत भनेको दोश्रो स्थूल शरिर देखि जुदा सूक्ष्म शरिर छसो आत्मा को दोश्रै उपाधि हो तेस्को स्वरूप भंछं दशेन्द्रिय भनेको कान् नेत्र जिभ्रो घ्राण छाला ई पाँचज्ञान इन्द्रीयर वाणी हात पाद गुह्य लिंग इ पाँचकर्म इन्द्रीयजंबायि १० रंस कल्प विकल्पात् मकमन निश्चयात्मक बुद्धि अरू प्राण अपान व्यान उदान समान इ

१७ वस्तुको लिंग शरिहुँछ तेस्लाइ सूक्ष्म शरीरपनि भन्छन् यस्को आधार अर्थात अपंचीकृत पंचमहा भूत छ तेस्ले गरिकन उत्पन्न भएको सूक्ष्म त्यो अदृश्यछ देखिदैन सोसूक्ष्मशरिर भोगादिको साधनछ अर्थात् स्वर्गनरकादिभोग स्थूलशरीरमावसेर कर्मको जोछ सुख दुःख रूपफल तेस्को भोक्ताछ तेस्को वियोग अर्थात् जुदाहुनाले पुरुषलाइ मरेछ भन्छन् ॥ २६ ।

अनाद्य निर्वाच्य मपीह कारणं
माया प्रधानं तु परं शरीरकम्।
उपाधि भेदात्तुयतः पृथक् स्थितं
स्वात्मान मात्मन्य वधारयेत्क्रमात् ॥ ३० ॥

यस्ता प्रकारले स्थूल सूक्ष्म ई दुइजीवको उपाधिकहियो अवईश्वरको उपाधि कहिंछ अनादिति अनादिभनेको उत्पत्तिरहित अर्थात् मूलप्रकृति जोनानाप्रकारको प्रपंचरूपपरिणाम तेस्ले गरिकन नासकन प्राप्ति हुन्छअनिर्वाच्यभनेको साचोकेकारण जोमाया असत्छंभनेसंसारको उत्पत्ति संभवैहोवैन सत्यमंछंभनेताज्ञानले गरिकनविनास्हुन्छ येसै कारण माया अनिर्वचनीयछ योमाया संपूर्ण जगत्को कारणछ अर्थयोहोकिसंपूर्ण जगत्को उत्पत्तिगर्दछयस्तोजो त्रिगुणीमायाछ तेस्लेनिर्विकार परमात्माब्रह्मविषे नानाप्रकारकाजीवईश्वरादिव्यवहारव्यर्थैं कल्पितछ पछिति जीव ईश्वरले संपूर्णजगतकल्पना गरेकोछ सोयोभ्र धानभनेकोउत्कृष्ट अर्थात् ब्रह्मविषे नामरुप

जगत्कल्पनागर्नें अधिष्ठान अतिप्रबसोइ श्वरकोउपाधिकारणशरिरहो यस्ता प्रकारको उपाधि तेस्लेगरिकन एकअद्धितीय अपंग शुद्धचैतन्यविषे जीव ईश्वर व्यवहार अर्थात् योजीव हो योहो ईश्वरहो यस्तोभेदबुद्धि गरेर जन्ममृत्यु आदि व्यवहार जोमायाले कल्पना गरेकिछ सो मिथ्याहो तिन्को लक्षणा गरेर तिनै उपाधिकोत्यागरि आत्माजोहो आफ्नू स्वरूप साक्षात्कारनित्यप्राप्त शुद्ध चैतन्य तेस्को श्रवण मनन निदिध्यासन् क्रमलेगरी कन निश्चयगर्नु ॥ ३० ॥

कोशेष्वयं तेषु तु तत्तदा कृतिर्वि-
भाति सँगा त्स्फटिकोपलो यथा
असंग रूपाऽयमजो यतोऽद्धयो वि-

T

ज्ञायतेऽस्मिन्परितो विचारिते ॥३१॥

अबमहावाक्यको अर्थको बिचारगर्ने पहिले कहिन्छकोशेष्विति । आनन्द मयकोशको उपाधिवाला जोछब्रह्म सो अन्नमय प्राणमयमनोमय विज्ञानमय ईचारकोशको नामहो तरवारकोम्यान भिन्नतरवारहुन्छत्योम्यानरूप प्रतीतहुन्छतर आफुतरवार भिन्नशुद्धहुँछ तैस्तै ब्रह्मजोशुद्ध चैतन्यत्योकोशरूप प्रतीत हुन्छ तेस्को भिन्नशुद्ध चैतन्य इंदेखि भिन्नछ जस्तै स्फटिकजोछसो स्वभावले गरिकनशुद्धछपरंतु जस्तै कालो पहेलो रातो फुल अथवा बस्त्र इन्का साथमिल्नालेतस्तै कालो पहेलो प्रतित हुन्छ कोइएकबादि आनन्दमय कोशलाइप निजीव उपाधिमान्दछद् त्योसमेत पाँचकोश मान्दछन् एस् महावाक्यको बिचारगर्नाले ए

स्तोनिश्चय हुन्छकियो परमात्माअसंगछ अ
र्थात् इ पांच कोशका विकार सङ्गले रहितछ
वेदले पान आत्मा असंगछ भान भंछ
अर्थात् ब्रह्म ई पाँच कोशमा शान्ति रूपले
रहेकोछ असंगोनहिसज्जतेइति श्रुतेः ॥ ई
पाचकोशका धर्ममा लिप्त छैन् अरू गोता
हरूमा पनि श्रीकृष्णले अर्जुन सित भनेको
हेकौंतेय हेअर्जुनजी अनादि निर्गुण पर
मात्माब्रह्मछसो ब्रह्मनाश रहितछसोई पंचको
शरूपसरोमां रहेको पनितरयेस्का विचमा
आफु केहिगर्दैन अरू सरीरमा। लिप्त छैन
अर्थयोहोकि ईपाँचकोश रूपशरीरका धर्मता
जुदाछ तात्पर्य योहो कि जन्म जरा मृत्यु चु
धापियास शोकमोहज्ञान अज्ञान इजोछ सो
कोशज़ोधर्म तेस्देखिन्रहित असंग आकाश

छै रहेकोछयस्तो जोजन्ममृत्युरहित अद्वितीय आत्माछसोभ्रमलेगरिकन आफुलाइस्थूलरूपजोछ अन्नमयकोशादि पाचअज्ञानलेमान्छकिमस्थूलहुँ म मनुष्यहूँ यस्तोसँगकोशरूपप्रतीतहुन्छ अवआत्मा अन्नमयकोश स्थूलशरीर कासाथमिलद्छतव मन्दछमस्थूलहुँ कृशहूँब्राह्मणहूँ क्षत्रीयहूँ शूद्रहूँयस्तो अन्नमया कोशप्रतीतहुँछ मबलवान् हुँमभोकोहुँमप्यासोहुँयस्तोप्राणमयको शरूप प्रतीत हुंछयोशरिरमेरोहो छोरा मेरोहो घर मेरोहो अफ्नसंमविसैंरअधर्मगर्दैरहेछुपरंतु अबजोहाम्रापुर्खा हरुलेगरिआएकोधर्मसोगर्दछु यस्तोमनोमय कोशप्रतीतहुन्छ पैल्हेतामलाइकेहि थाहाथिएन अवभने मैलेनिश्चयगरी हाम्रापरम्परादेखिचलि आयेको वेदविद्यानैसवधर्मकोमूलहोयस्तो विज्ञानमयकोश प्रतीतहुन्छ पैलेतामदुः

खीथिआअत्र सब बात को आनन्दछु केहिशो कसुर्ता छैन यस्तो आनन्दमय कोश प्रतीतहु न्छ यस्ताप्रकालें जन्ममृत्युक्षुधा तृषाशोक मोहज्ञान अज्ञानसुखदुःखजोछपंचकोश को धर्मतिनकोप्रतीत तत्ववेत्ता लायि हुन्नतात्पर्य योहोतत्ववेत्ता। जन्ममृत्यु आदिपंचकोशकाध र्मलायि भ्रमलेगरिकन आफुमामांदैनन्अ र्थात इनकोसाद्धि अलगअजमनेको जन्म रहित अद्वितीयसच्चिदानन्दकूटस्थ अधिष्ठा नचैतन्यस्वरूपधीर्यंधरिकन आफ्नुस्वरुपला यिजानिकन ३ ४ कोशकाधर्मकासंसयविपर्यय देखिरहितयोगगरिकन सुखरूपब्रह्मानन्दमा रहन्छ ब्रह्मरूप भैकनरहनुयैमहावाक्यकोअ र्थविचार्गर्नेको फलहो हो ॥ ३१ ॥

बुद्धेस्त्रिधावृत्तिरपीह दृश्यतेस्वप्ना-

दिभेदेनगुणत्रयात्मनः ॥ अन्योन्य-तोऽस्मिन्व्यभिचारतोमृषानित्य पर-ब्रह्मणिकेवलेशिवे ॥ ३२ ॥

अब जाग्रत, स्वप्न, सुसुप्ति भेदलेगरिकन जोछन् ३ अवस्थासो बुद्धिको धर्महोआत्माकोहोइन यो भनिन्छ बुद्धेति ॥ आत्मामा जो इ जाग्रत स्वप्न सुसुप्ति ई ३ अवस्था भ्रमलेगरिकन प्रतित हुन्छन्सोत्रिगुणात्मकबुद्धिका धर्म हुन् आत्माका व्हैनन् किन भने आत्मा इन्को साक्षि इन्देखिभिन्न छ परन्तु वृथा भ्रमले गरिकन आत्मामा जो प्रतित हुन्छ सो बुद्धि आरोप गरेको होवास्तव आत्मा सर्व धर्म रहित असंग छ अन्योन्य इति ॥ अन्योन्य भनेको भ्रम गरिकन अर्का को धर्म आर्का प्रतीत हुँनु व्यभिचार भने

को व्यवहार जस्तै भ्रमले सर्पको धर्म डोरिमा प्रतीत हुन्छ तेस्तै बुद्धि अथवा चिदाभासको धर्मले अधिष्ठानकूटस्थमा भ्रम गरि कन प्रतित हुन्छ यस्को नाम अन्योन्य अध्यास भनेको भ्रमहो तात्पर्य यो हो अति आनन्दादि जो स्वभाव छ सो चेतनाको बुद्धि प्रतीत हुन्छ दुःख जडादि व्यवहार जोछ बुद्धिको धर्म सो चेतनाले प्रतीत हुन्छ अथवा स्वप्नमा जाग्रत सुषुप्तिको अभाव तेस्तै सुषुप्तिमा जाग्रतको अभाव जाग्रतमा सुषुप्तिको अभाव भनेको नाश हुन्छ अरु आत्मा एकर सर्व कालमा संपूर्णको साक्षि स्वरूप रहंछ नित्य भनेको सत्यजन्ममृत्युले रहित पर त्रिगुण प्रपंचले रहित व्यापक ब्रह्म केवल अद्वितीय ( शिव ) कन अर्थात्मुक्त

T

आनन्द ( व्यभिचार ) व्यवहारले संभव छैन येस्कारण ले सर्वव्यवहार रहित असंग आत्मा मा जाग्रदादि अवस्थाको आरोपमिथ्याछ येस्तो मुमुक्षु वाला निश्चय गरून् ॥ ३२ ॥

देहेन्द्रियप्राणमनश्चिदात्मनां संघादजस्रं परिवर्ततेधियः । वृत्तिस्तमोमूलतयाज्ञलक्षणायाद्भवेत्तावद सौभवाद्भवः ॥ ३३ ॥

अबत्याग गर्नै योग्य संसारको मूल अज्ञान तेस् अज्ञानको वृत्ति त्यो कहिंछ ॥ देहेति ॥ हेलक्ष्मण जव संम अज्ञानको कारणले देह इन्द्रियप्राणमन चिदभयास् वनेर संग्रहले नै एकठामै अज्ञनतालाई जनाउने वालो रज

स्तम प्रधान् अर्थात् रजो गुण तमो गुण प्रधानछ जस्ता थोऽव्यवहार रहला तब संम जन्म मृत्यु स्वर्ग नर्कादिका भोगसंसार देखि नछुट्दैन यस्कारले तम रजोगुण बुद्धिलाई त्यागगर्नू र आत्मतत्वजब संम साक्षात्कार हुदैन तब संम सत्व गुणलाई न छोडनु दैवी संपद्विमोक्षाय बंधनायासुरीमता इतिभगवत् वचनात् ॥ ३३ ॥

नेति प्रमाणे ननिराकृताखिलोहृदा समास्वादितचिद्घनामृतः । त्यजेदशेष जगदात्तसद्रसं पीत्वायथाम्भः प्रजहाति तत्फलम् ॥३४॥

अब जौन पुरुषले माहावाक्यका अर्थको विचार गरेको छ तेस्ले के गर्नें यो भनिन्छ

T

( नेतीति ) हेलक्ष्मण नेति नेति यस् वेदका प्रमाणले खण्डन् गरेको छ अर्थात् झुटो जानेको छ सब जगतलाई जस्ले फेरि सत्व प्रधान्मनले गरिकन आस्वादन् अनुभवै गरेको संसार दुःखले रहित चैतन्यघन अमृत रूप सुख जस्ले पायेको छ सो ज्ञानी सम्पूर्ण जगत् लाइ त्याग गरुन् देइ इन्द्रि-यादीद्वारा ज्ञानको लाभ भयाको छ तेस्लाइ त्यागगर्नु कसरि उचित् छ भनि भनौलाहेल क्ष्मण जस्तै तृषावान पुरुषले खैंचेको छ सम्पूर्ण माधुर्यरसजस्को यस्तो नखिल सुंतला आदी फलको रस तेस्लाइपियेरफेरि खोष्टालाइ त्यागदछ तस्तै सम्पूर्ण जगत्को सार ब्रह्म सुष्त्यो पाये पछी असत् जडदुख रूप संसारलाई फेरि इच्छा गर्दैन लोकमा

निश्चल गरिकन सुखको साधन पुत्रमित्रादी उत्पन्न गर्दछन् दुखको कारण जो चोर सर्पादी तेस्लाई त्यगगर्द छन् तेस् प्रकारले त्याग् ग्रहणको भय आत्मा न ठान्नु मृग तृष्णा को जल् पिउँना लाई पुरुष् इच्छा गर्दैन ॥ ३४ ॥

कदाचिदात्मानमृतोन जायते न क्षीयतेनापिविवर्धतेऽनवः । निरस्तस र्वातिशयः सुखात्मकः स्वयं प्रभः सर्वगतोऽयमद्वयः ॥ ३५ ॥

अबकर्मउपासनाको फलजोस्वर्ग, नर्कधन पुत्र स्त्री मित्र संबान्ध आदिसम्पूर्ण सन्सार भोगसो अनित्य छ अर्थात् नाशवान् तेस्ले

वैराग्य हुनालाइ आत्मा कोनित्यअर्थात्जन्म जरामृत्यु सन्सारदुःखदेखिरहीत् कहींछकदा चिदिति । कोहिकालमा पनि आत्माकोविनास हुन्न जन्मपनि हुन्नकिन अस्ति जायते वर्धत विपरिणमते अपक्षयिते विनश्यति योजो छषडविकारतेस्लेआत्मारहीतछ यसकारणले आत्मा कैलेछिन्नहुन्न पुष्टपनि हुन्नघटतैनपनि कैलेपनि बढदैननवीनपनिहुन्न पुरानुपनिहुन्न अरूदेहइन्द्रीय आदिसकल विकार देखिरहितसर्वकालमा एकरस स्व स्वरूपसबदुःखदेखि रहितस्वप्रकाश सर्वगातभनेको चराचरमा एक रसव्यापक अद्वितीय जस्को लोभले अरू कोहि जगतमा लाभ हुनु शेष रहन्न जस्लाइ जान्नाले फेरि केहि वस्तुजान्नाको इच्छारहन्न यस्तो आत्मा स्वरूप ब्रह्मानन्दमा जो पुरुष

आनन्दितछ सो मिथ्या संसारमा प्रीतिगर्दैन तात्पर्ययो कि अहंमनुष्यः अहं ब्राह्मणः अहं शूद्रः यस्तो विपरीत गर्दैन ॥ नाहंमनुष्यो नचदेवयक्षोन ब्राह्मण क्षत्रिय वैश्यशूद्राः ॥ नब्रह्मचारी नगृहीवनस्थो भिक्षुर्नचाहं निज बोधरूपः ॥ अहं ब्रह्मा स्मीतिस्थित इति ॥

एवं विधेज्ञानमये सुखात्मकेकथं भवोदुःखमयः प्रतीयते । अज्ञानतोऽध्यासवशातप्रकाशतेज्ञा नेविलीयेत विरोधतः क्षणात् ॥३६॥

यस्ता प्रकारको जोसर्व बिकारहोतआत्मा छ तेसमा जन्मवृद्धिमरण रूपप्रवाहकोदुःखरूपसंसारको प्रतीति कसरिहुंछ एवंविधि इति ॥

एवंविधे यस्ताप्रकार का ज्ञानस्वरूप सच्चिदा नन्दआत्मामाभव भनेको दुःखरूपजगत् क सरिप्रतीतहुन्छ उत्तर अज्ञानत इति अज्ञान को मूल जो छ दश इन्द्रिय अन्तः करणादि तेस्का साथमिलेरतेस्को तद्रूप गरेरमनुष्यहुँ यस्तो भोगासक्त अर्थात् भोगमा प्रीतिचित्त माअध्यास भनेको भ्रम तैस्कोवसभएर बि परित बुद्धिले दुःख रूप संसारका सुखरूप प्रतीति हुन्छ शंका यस्ता प्रकारले अध्यास का बसिभूत भएर भ्रमले गरिकन मिथ्या दुःखरूप जगत् को जो सुख रूप प्रतीति हुन्छ भने तेस्को निवृत्ति कसरि हुन्छ उत्तर ज्ञानले संसार भ्रमको निवृत्ति हुन्छ कसरि ज्ञान जो छ अज्ञानको विरोधिछ तेस्को उदय हुने मात्र तेसै क्षणमा संसार को

मूल कारणजो अज्ञान तेस्को नास हुन्छतेस्को नास भये पछि त्यो अज्ञान को कार्य जो संसार सो पनि नाश होई जान्छ जस्तै डोरिको ज्ञान हुनाले सर्प भ्रमको नास् होइ जान्छ ॥ ३६ ॥

यदन्यदन्यत्र विभाव्यतेभ्रमाद-ध्यासमित्याहुर मुंविपश्चितः। अ सर्पभूतेऽहिविभावनं यथा रज्ज्वा-दिके तद्वदपीश्वरे जगत् ॥ ३७ ॥

अबअध्यासको स्वरूपकहिन्छ यदन्यदिति जोचांदिइत्यादिस्थानमा स्थितछ कांत्रोसर्पडो रिइत्यादिमा भयजनितनेत्रका तिमिरादिदोष लेप्रतिनहुन्छ अर्थात् अज्ञानलेगरिकनभ्रमभै डोरीमासर्पज्ञानहुन्छ यस्कोविपश्चित्जोछबिबे

T

कि तेस्लाइ अध्यासभन्छन जस्तैडोरीमा सदासर्वदा सर्पको अभावछकोनैकालमा बिना डोरीमासर्पहुन्न तेस्मा मिथ्याभावनाले सर्पको आरोपभै भयकंपादिदुःखकन पुरुषमासहुन्छ तेस्तै ईश्वर आत्मा तेस्मा बुद्धिकादोषलेदुःख रूप मिथ्या संसार का आरोप गर्द छन् जस्तै अथार्थ डोरीको स्वरूप जान्नाले सर्प को भावना दूर हुंछ तस्तै आत्मस्वरूप ज्ञानले देहादि संसार भावना अर्थात् भ्रिति दूर हुन्छ ॥३७॥

विकल्प मायारहिते चिदात्मकेऽहंकार एषप्रथमःप्रकल्पितः।अध्यासएवात्मान सर्वकारणे निरामय-ब्रह्माणि केवलेपरे ॥३८॥

विकल्पति हेलक्ष्मण वास्तवले तासर्व विकल्प मायाका संगले रहित चिद्रूप सर्वकारण दुःख स्पर्श रहित् आनन्द मय सम्पूर्ण विकार रहित जो व्यापक आत्मा तेस्मा प्रथम अहंकार जो कल्पना गरेकोछ सोई अध्यास हो अर्थात अहं मनुष्य इत्यादि जो बुद्धि को भ्रम ज्ञान गरिकन अध्यास छ सोइ संसारको मूलकारण हो ॥ ३८ ॥

इच्छा दिरागादि सुखादिधर्मिकाःसदा धियःसंसृतिहेतवःपरे ॥
यस्मात्प्रसुप्तौ तदभावतःपरःसुखस्वरूपपे णविभाव्यतेहिनः ॥३९॥

अन्वय व्यतिरेक गरिकन प्रमाण सिद्धगर्द

छन्इच्छादीति ॥ परभनेको सर्वप्रपंचातीनसा क्षि चैतन्य परमात्मा तेस्मा मिथ्या जगत् दुःख को असंभव छ किनभने मिथ्या भूत संसारको कारणले अतिरिक्त भनेको रहितछ तेस्कारणले इच्छादि भनेको इच्छा अनिच्छा धर्म अधर्म रागद्वेष कामक्रोधलोभमोह शोक संताप सुख दुःखादि धर्मवाला बुद्धिछ सोही संसारको मूल कारण हो अर्थात् जहाँ जहाँ बुद्धिछ तहाँ २ धर्माधर्मादि संपूर्णव्यव हार हुन्छ जहाँ बुद्धि छैन तहाँ २ इच्छादि प्रतित हुँदैन यो अन्वय होअन्वय भनेको जउन हुनाले संपूर्ण थोकहुन्छ जस्का अभाव ले केही पनि हुदैन यो व्यतिरेकही अर्था त्कारणले कार्यहुन्छ यो अन्वय सिद्ध भयो सुसुप्ति अवस्थामा बुद्धि आफ्नू कारण

आज्ञानमा लिन हुन्छ तब धर्म अधर्मादि प्रतीत हूँदैन अर्थात् कारणका अभावले कार्य हुँदैन यो व्यतिरेकहो त्यो जस कारण ले सुसुप्ति अवस्थामा बुद्धिको अभावले धर्मादिको अवभाव हुन्छ तेसकारणले सन्सार बुद्धि नष्टभयो सिद्धभयो बुद्धिको उपाधिलय हुँनाले सम्पूर्ण धर्म अधर्म रहित सुखस्व रूप वास्तव चैतन्य अखण्ड सच्चिदानन्दमा सुसुप्तिमा रहन्छ तेस्लाइमोक्ष निश्चय गरुन् अर्थात् सन्सार चिन्ताछोडेर निर्विकार आत्माकोचिन्ता गरुन् जब पुरुष सुसुप्तिबाट विउझेर उठदछन् तब भन्छन् म आज यस्ता आनन्दले सुतेकोथिया मलाई केही छैन सो आनन्दानुभव गर्ने पुरुष आत्मा स्वरूप ब्रह्मको मलाइ केही खबर छैन यो

जो भन्छ तेस्लो यो प्रतित हुन्छकि सम्पूर्ण धर्मा धर्म रहित सुख स्वरूप आफनुरूपलाई तेस्ले निश्चय गर्छ तेस्कारणले उठेर भन्छ मलाई धर्म अधर्म को खबर थीएन सुख स्वरूप आनन्दमा एतिबेर रहेको थीञा॥३६॥

अनाद्य विद्योद्भव बुद्धिबिम्बितो
जीवःप्रकाशोऽयमि तीयते चितः।
आत्मा धियःसाक्षितया पृथक्स्थ
तोबुद्धय परिच्छिन्नपरः स ए
वहि ॥४०॥

तत्पदार्थ र तवं पदार्थको स्वरूप फिरीपनी भन्दछन् अनादीति अनादि जो छ अविद्या तेस् देखिछ उत्पत्ति जस्का यस्ति जो छ बुद्धि अर्थात अन्तःकरण कूट संज्ञा तेस्मा

प्रतिबिंबभाव प्राप्त भयाको जो चैतन्य तेस्को तेज भनेको छाया छाया भनेको आभास येस्तो जो चिदाभास तेस्को नाम जीव हो अर्थ योकिबुद्धिको बृत्तिमा जो चिदाभास बृत्तिधर्ममा आरूढ छ तेस्को नाम जीवहो परमात्मा जो छ बुद्धिका बृत्तिको साक्षिबुद्धि का धर्म देखिभिन्न भै रहेको छ जस्तै घड़ा लाइ देखने पुरुष घड़ा देखि भिन्न छ तेस्को नाम अन्तरयामि पुरुष हो अर्थयो कि बुद्धिका बृत्तिके जो छ साक्षिकूट विषे स्थित अन्तरयामि सो ईश्वर कहिन्छ सो अहंमनुष्य यस्प्रकारको अन्तः करण भने को बुद्धि धर्मको अध्यासवान् साक्षिपरमा-त्मा जो सर्वत्र विद्यमान भनेको ब्यापक छ तेस्मा बुद्धिको धर्मको असम्भवछ जस्तै

T

साक्षि सूर्यमा साक्ष्य जगतको धर्मको असम्भव छ परमात्मा लक्ष्यविक्षेपलक्षणादि जो छ बुद्धिको लक्षण तेस्ले पनि रहित छ किन भने परमात्मा एक स्वभाव वाला नित्य एक रसलयबिक्षेपधर्म अधर्म आदि रहित छ यस् प्रकार परमात्माको स्वरूपको ज्ञानले गरिकन प्रति बिंबक आधारजो छ अधिष्ठान साक्षि कूटस्थ, आत्मा अन्तर्यामि शुद्ध चैतन्य सो अविद्याको कार्य जो छ अन्तःकरण तेस्को नाश हुनाले प्रतिबिंब को अभाव हुँछ प्रतिबिंबको अभाव हुनाले जीव् र परमात्मा दुवै अभेद हुन्छन् अर्थात् परमात्मा शेष रहेछन् अन्तःकरणबिशिष्टगरिकन जो जीव आफ्नू अध्यासछ सो दुहुन्छ जस्तै जलमा प्रतिबिंबका

भाव लाइ प्राप्त भयाको जो सूर्य छ सो जल न भए पछि प्रति बिम्ब अर्थात् सूर्य को छायाको अभाव हुनाले सूर्य शेष रहन्छन् ॥ ४० ॥

चिद्बिम्बसाक्ष्यात्म धियांप्रसंगत स्त्वेकत्र वासादन लाक्तलोहवत्। अन्योन्य मध्यासव शात्प्रतीयते जडाजड त्वचचिदात्म चेतसोः४१

हे लक्ष्मण चिदात्मा अर्थात् चैतन्यरूप आत्मारबुद्धि इनूको परस्परजो अभ्यास अर्थातपरस्पर तादात्म्य रुपलाइ बुद्धिका चित्त रुपमान्नु औ चित् रुप आत्मा लाइ बुद्धि मान्नु तेस्मा जडत्व प्रतित हुन्छ अर्थात् वास्तवमा जड जो छ बुद्धि तेस्मा भा जडत्वको

प्रतित हुन्छ यस उस्ले तार्किक तर्क शास्त्र वाला लोक ज्ञानाश्रय आत्माको मान्दछ न्सो अध्यास चिदाभास इन्द्रीयादिले गरि कन सहित मन औ अन्तःकरण इन्को परस्पर सन्निकर्षले अर्थात् समिप हुनाले प्रतित हुन्छ जस्तै अग्निमा तपायाको फलां को डल्लोतेस्मा अग्निको पृथक् विभाग न हुनाले प्रकाश दाहादि अग्नीको धर्म तेस फलां मा एकता हुनाले प्रतित हुन्छ तेस्तै आत्माको र बुद्धिको पनि परस्पर धर्म प्रतित हुन्छ ॥ ४१ ॥

गुरोः सकाशादपिवेदवाक्यतः संजातविद्यानुभवो निरीक्ष्यतम् । स्वात्मानमात्मस्थमुपाधिवर्जितं त्यजेद-

शेषंजडमात्मगोचरम् ॥ ४२ ॥

वेदकाअर्थकोप्रतिपादक जोश्रुस्मृतिपुराण गीतादितेस्लेगरिकन भाषादिशब्दको निषेध जान्नु ॥ गुरोरिति ॥ गुरुमुखदेखिबेद बचन कोश्रवणले उत्पत्तिभएकोज्ञान अद्वैतसुखस्व रुपब्रह्मानन्दसुखकोप्राप्ति गर्नेवाला तेस्कोनां श्रवणहो तेस्कोमनले उत्पत्तिभया को विद्याम नेको ज्ञान आत्मरूपको अनुभवरू पनिश्च यगर्नेवालासोमननहो और आत्मापरमात्मको एकतारूपअभ्यास तेसले अरू ब्रह्मको एका कार वृत्तिनदीकाधाराझैं प्रवाहरूपशाक्षात्कार को नांनिदिध्यासनहो तेस्ले गरिकन चिदा नंदस्वरूप स्वात्मानंद भनेको आफ्नु संपूर्ण उपाधिले रहित स्वरूप सम्पूर्ण धर्म अधर्म अन्तःकरणमा देखेर तेस देखिभिन्न तिंको

देखने वाला साक्षिस्वरूप कूटस्थ चैतन्य अधिष्ठान् अन्तरयामि आफ्नुरूपकोसाक्षात् कारगरोस् साक्षात् कारनिर्विकार ब्रह्म एस्तो आफ्नु स्वरूपलाइ जानि सम्पूर्ण देहादि जड़ समुदायलाइ त्यागनुं उदासीनभै रहनु

प्रकाशरूपोऽहमजो हमद्वयोसकृ-द्विभातोहमतीवनिर्मलः । विशुद्धवि-ज्ञानघनोनिरामयः संपूर्ण आनन्द मयोहमाक्रियः ॥ ४३ ॥

अबसर्व उपाधि रहित जो छ ज्ञेयस्वरूप ब्रह्मतेस्को २ श्लोकले निदिध्यासन प्रकार कहिन्छ प्रकाशेति । म प्रकाश रूप हूँ भने को स्वप्रकास हुँ जो दृश्यप्रपञ्च छ सो पर प्रकाश्य छ जड़हुनाले घटादि झैं औ म

अजहुँ भनेको जन्ममृत्यु रहितछु कसरि जन्ममृत्यु वाला सम्पूर्ण पदार्थता समान छ मेरो नास कैले हुन्न म अद्वयहुँ भनेको सजातीय विजातीयस्वगतभेदले रहितहु यो भेद मायामा हुन्छ म ता निराकारछु यस कारण ममाभेद केहिछैन औ असकृतविभातः भनेको म सर्व जगतको प्रकाश गर्ने हुन सूर्यादिका प्रकाशले प्रकासमान छैन अती वुनिर्मल भनेको मायाकृत आवरण विक्षेपरूप देखि रहित छु विशुद्ध विज्ञान भनेको शुद्ध चैतन्य एकरस सर्व कालमा स्थित हुन निरामय भनेकोकर्त्ताभोक्ता पनाको अभिमान रूप रोगले रहित हुँ औसम्पूर्ण देसकाल वस्तुको परिच्छेदले रहित केवल आनन्द स्वरूप हूँ अक्रिय भनेको सर्व विकार रूप परिणाम सो अनित्य कर्त्ता क्रिया कर्म रूप त्रिपुटिले रहितछु कसरि मनिराकार

निर्लिप्तहुं क्रिया रूपवालाको विषे हुन्छ ४३

सदैव मुक्तोहमचिन्त्यशक्तिमानती न्द्रियज्ञानमविक्रियात्मकः । अनन्त पारोक्षमहर्निशं बुधैर्विभा वितोऽहंहृ-द्विवेदवादिभिः ॥४४ ॥

सदैवेति म भूत भविष्य वर्तमान सबका लमामुक्तछू अर्थात् सर्व धर्म रहित एक रस स्थितहुँ म अचिन्त्य शक्तिवाला भनेको देह इन्द्रीय रहित मनवाणि देखि परज्ञानस्वरूप स्थित हुन् श्रुतिपनि भन्छ आत्मस्वरूप मन वाणि देखि परछयो अर्थहोकि मन वाणिले गरि कन जानि दैन यतो वाचोनिवर्तन्ते अप्राप्य मनमा सहेतिश्रुतेः ॥ म अक्रिय भनेको परिणाम रहित् हुँ म अनन्त पार भनेको देसकाल बस्तु परिच्छेदले रहित् हुन् यस् प्रकारको छ परमात्मा स्वरूप

तेस्को मुमुक्षु अर्थात् मोक्षको इच्छा गर्ने पुरुष रात दिन चिन्तन् गरोस् कि यस्तो लक्षण वाला जो छ परमात्मा सो मै हुँ ॥

एवंसदात्मानमखण्डितात्मना विचारमाणस्यविशुद्धभावना । हन्यादविद्यामचिरेणकारकैरसायनं यद्वदुपासितं रुजः ॥ ४५ ॥

अब यस्तो भावना गर्नेवालाको जो फल हुन्छ सो कहिन्छ एवमिति । एस्प्रकारकहेकारितिले सदा अखण्डआत्माको ध्यान गर्दछजोपुरुष तेस्लाई विशुद्ध भावना अर्थात् ब्रह्माकार अंतःकरणको बृत्तिउत्पन्नहुन्छ तेस्को जन्ममृत्यकोकारणजोछकर्म तेस्कर्म सहित अज्ञान जनितजगत्‌र अज्ञानलाई चाँडैनासगर्दछ जस्तै उपासित अर्थात् सेवन गरेका रसायन औषधीले संपूर्णरोगको नाशगर्छ तेस्तैब्रह्मविद्या तेसलाई निदिध्यासनले साक्षातकारपर्य

T

न्तजोपुरुष निरन्तरसेवनगर्दछ तेस्को जन्म जरामृत्यु आदिजोछमहाव्याधि तेस्लाइनाश गरि दिन्छ ॥ ४५ ॥

विविक्तआसीनउपारतेन्द्रियोवि
निर्जितात्मा विमलान्तराशयः ।
विभावयदेकमनन्यसाधनोविज्ञा
नदृक्केवलआत्मसंस्थितः ॥४६॥

अबध्यानगर्ने प्रकार कहिन्छ विविक्त इति विविक्तभनेको येकान्तसर्वउपाधिरहित स्थान मा पद्मासनादियथायोग्य आसनबाँधिसपूर्ण इन्द्रियको व्यापारले रहित शमदमादिसाधन संयुक्त प्राणायामादि गरिकन वशगरेको छ अन्तःकरणमन जस्ले अर्थात् रागद्वेषमलले रहित छ चित्त जस्को सो पुरुष केवल अनुभवरूप दृश्य प्रपंचमान रहित ध्यान गरोस् एस्को नाम विवेकिनिर्विकल्प समाधि हो किनभने समाधि २ प्रकाको हुन्छ एक

सविकल्प दोश्रो निर्विकल्प तहाँ सविकल्प समाधि मा ध्याता ध्यान ध्येय यस्तो त्रिपुटि प्रतीत हुन्छ निर्विकल्प समाधि मा त्रिपुटिको अभाव हुन्छ किनभने केवलध्येय मात्रै र हुन्छ अनन्य साधन भनेको तत्व ज्ञानले वाह्य जो छ कर्म उपासनादि नानारूप प्रपंच भ्रमले रहित केवल असंग अद्वितीय आत्मामा स्थित चित्तको समाधि भनेको समाधान पुरुष निर्विकल्पलाई गरि राग द्वेष सहित विषयाभिलाषचित्तवाला पुरुष को निर्विकल्प समाधि स्थिर हुँदैन तेस् कारणले निर्विकल्प समाधि गर्न तेस्लाइ अधिकार छैन ॥ ४६ ॥

विश्वंयदे तत्परमात्मदर्शन वि-लापयेदात्मनि सर्वकारणे। पूर्ण श्चिदानन्दमयोवतिष्ठतेन वेदबा ह्यंनच किंचिदान्तरम् ॥ ४७ ॥

विश्वमिति ॥ फेरि परमात्मा छ प्रकाशक जस्को यस्तो जो चराचर विश्वतेस्लाइमाया सन्निधानलेसबकोउपादानकारणजोपरमात्मा तेस्ला लय गरि देखोस् अर्थात् कारण देखि भिन्न कार्य सत्ता लाइ न देखोस् यस्तो पूर्ण भयेपछि अर्थात् प्राप्तभएकोछु सबको म जस्को यश्तो चिदानन्दरूप मै रहेपछि तेशसमयमा बाहिर भित्र ब्रह्मदेखिन् भिन्न अर्थोक्केहिदेख्दैन ॥ ४७ ॥

पूर्वं समाधेरखिलं विचिंतयेदों
कारमात्रंसचराचरंजगत् । तदेव
वाच्यंप्रणवोहिवाचकोविभाव्यते ज्ञान
वशान्न बोधतः ॥ ४८ ॥

अब समाधि सिद्धहुँनाका निमित्त पैल्हे पुरुषले गर्नें कहिन्छ ॥ पूर्वमिति । हे लक्ष्मण तेस् निर्विकल्पक समाधिका पूर्वावस्थामा सम्पूर्ण चराचर जगतलाइ

ओंकार मात्र चिंतनगरोस् अर्थात् ओंकारछ
बाचक जस्को एस्तो भावना गरोस् जस्मा
सब जगत् वाच्यछ ओंकार वाचक छ ४८
अकारसञ्ज्ञः पुरुषोहि विश्वको ह्युकार
कस्तैजसइर्यतेक्रमात्॥ प्राज्ञामकारः
परिपठ्यतेऽखिलैः समाधिपूर्वनतुतत्व
तो भवेत् ॥४९॥

यो भावनापनि अज्ञान का वशलेहुँछ ज्ञान
कोअनन्तर हुँदैनसोप्रकारदेखाउछन् ओंकार
मा अकारउकारमकारतीन वर्णछन् उपासना
क्रमले भन्दछन् हे लक्ष्मण जाग्रत अवस्था
को स्वामिजो विश्वछ तेस्लाई अकारजानोस्
अर्थात् ओंकारका आदिअक्षर जो अकार
तेसका वाच्य अर्थ जाग्रत् अवस्था को
अभिमानि जो महूँसो समष्टी श्थूल उपाधि

T

को अभिमानि विराट्देखि भिन्नहूँयोभावना प्रणवका अकारमा गरोम् फिरि यस्तै भकार ले स्वप्न अवस्थाको श्वामिजो तैजसमहूँसो ओंकारकोद्वितीय वर्णजोउका र तश्कोवाच्य अर्थ हुँ फिरि सूक्ष्मसमष्टि उपाधि जोहिरण्य गर्भ तेस देखिन् अभिन्न हुँ अर्थात् तेसैको श्वरूप हुँ यस्तो प्रणवकाद्वितीय वर्णउकारमा पुरुष भावना गरोस् तेश्तै सुसुप्ति अवस्था को अभिमानि जो प्राज्ञतहुँसो ओंकारको तृतीय अक्षरको वाच्य जो मायोपाधिक ईश्वर तेस देखि अभिन्न हूँ अर्थात् तेसैको रूप हुन् यश्तो ओंकारको तृतीय अक्षा मकारमा भावना गरोस् तरयो भिन्न २ भावना समाधिका पैल्हे गरोस् भिन्न भिन्न भावनाको फलया माण्डूक्य उपनि

षदमाकहेको छ ॥ ४६ ॥

विश्वंत्वकारंपुरुषंविलापयेदुकारमध्ये बहुधाव्यवस्थितम् । ततोमकारं प्रविलाप्य तैजसंद्वितीयवर्णं प्रणवस्य चान्तिमं ॥५०॥

अबफिरि नित्यसमाधि गर्नेलयकोप्रकारवर्णन गर्दछन् ॥ विश्वमिति ॥ हेलक्ष्मणअकारको वाच्यजो विरद्रूपधेरैप्रकारकोस्थित विश्व तेस्को उकारवाच्यजो हिरण्य गर्भ रूप तैज समालयगरोसतेस्लाइ मकारवाच्यईश्वररूप प्राज्ञमालयगरोस् अर्थात् तसैको रूपदेखोस् आहावाच्चकजो अकारादिवर्ण तस्कोलयप ने विवक्षितछ तरसर्वत्रयहाँ लयउपाधि हरूको हुन्छ चेतनाकोलयवेदांतशास्त्र माकांही पनि कहेकोछैन ॥ ५० ॥

मकारमप्यात्मनिचिद्घनेपरे विलापयेत्प्राज्ञमपीहकारणम् । सोहंपरं ब्रह्म सदाविमुक्तिमद्विज्ञानदृङ्मुक्त उपाधितोमलः ॥५१॥

मकार इति ॥ फेरि तेसका उपरान्त मकार जोछ प्रणव तेश्का तृतीय चरण तेश्लाइ र मकारको वाच्य अर्थ जोईश्वर रूप प्राज्ञ अर्थात् कारण तेश्को पनि शुद्ध चैतन्य जो पर ब्रह्म तेस्मा लय गरोस् अर्थात् ब्रह्म रुप देखि कन उपाधि रहित् निर्मल विज्ञानरूप सदामुक्त परब्रह्म मैंहूँ एस्तो भावनागरोस् ॥ ५१ ॥

एवं सदाजातपरात्मभावनः स्वानन्दतुष्टः परिविस्मृताखिलः आ

स्तेस नित्यात्मसुखप्रकाशकः सा
क्षाद्विमुक्तोचिलवारिसिंधुवत् ॥

एवइति ॥ यस् प्रकारले उत्पन्न भयेको छ परमात्माको भावनाजस्लाई तेसैले आफ्नु स्वरूपानन्दैगरिकन जो सन्तुष्ट छ अरु विषयानन्दले सन्तुष्ट छैन किनभने तेसले परिणाममा दुःखरूप छ तैस कारणले तेस देखिविरक्त छ विस्मृति भएको छ पुत्रादि वर्ग जस्को साक्षात् नित्यसुख प्रकाशरूप आत्मरूप भैकन रह्याको यस्तो जीवन मुमुक्षु पुरुष अचल समुद्र झैं रहन्छ अर्थात् जस्तै समुद्रको लहरि चलायमान न भै कन स्थिर रहन्छ तस्तै विषय सम्बन्ध रूप जउन चित्तको लहरि निवृत्त भै स्थिर चित्त भै रहन्छ ॥ ५२ ॥

एवं सदाभ्यस्तसमाधियोगिनो निवृत्तसर्वेन्द्रिय गोचरस्यहि। विनिर्जिताऽषरिपोरहंसदा दृश्योभवेयंजितषड्गुणात्मनः॥५३॥

अत्रश्रीरामचन्द्रजी भन्छन्की जउन्प्रकारले मेरोस्वरूप प्राप्तहुंछसो भन्छुएवमिति हे लक्ष्मण यस प्रकारले सदा अभ्यासगरेको छ समाधिमा जसलेयस्तो योगयुक्त निवृत्तभयेकोछ सबशब्कोदिइन्द्रीय हरूका विषय देखिन्जीतेकोछ कामादिशत्रुजस्ले औसर्वज्ञ हुनु १ नित्यतृप्तरहनु २ ज्ञान स्वरूप हुनु ३ स्वतन्त्रहुनु ४ सबकालमारहनु ५ अनन्तरूपहुनु ६ योछछन्गुणजस्मा यस्तोपरमात्मामा जउन् भक्तलेवसंगरेकोछ यस्ताभक्तलाइमसदादर्शन दीन्छु अर्थात् जोमेरो भक्तयोगिसो

हीमेरो दर्शनपाउँछ अरुविषय भोगकामना वाला मूर्ख विवेक ज्ञान रहित बहिर मुख वृत्तिवाला अरुलाइ कौने कालमा कर्म उपासना दिजतन् गरेपनि म प्राप्तहुन्न ५३

ध्यात्वैवमात्मानमहर्निशंमुनिस्तिष्ठेत्सदामुक्तसमस्तबन्धनः । प्रारब्धमश्नन्नभिमान वर्जितोमय्येव साक्षात् प्रविलीयतेततः ॥ ५४ ॥

ध्यात्वा इति ॥ यस् प्रकार जीवन मुक्त आत्मस्वरूपलाइ मनन गर्ने पुरुष् जो सदा आत्मस्वरूपको ध्यानगर्दछ सो प्रारब्ध कर्म को बसिभुत नाना प्रकार भोग् भोग्दछ प्रारब्धकर्म कोनास हुनाले सम्पूर्णबन्धनदे खिछुटी मेरोस्वरुपहुन्छ अर्थात्जगतसाचि

ब्रह्मरूपभैकनअनन्त कोटिब्रह्माण्डको साक्षि स्वरूप भैरहंछसोपुरुष फेरिजन्ममृत्युरूपसंसारमाजन्मदैन ॥ ५४ ॥

आदौ च मध्ये च तथैवचान्ततो भवं विदित्वा भयशोककारणम् । हित्वा समस्तंविधिवादचोदितं भजेत्स्वमात्मानमथाखिलात्मनाम् ॥ ५५ ॥

अबसम्पूर्णधर्ममाएह्मिधर्म श्रेष्ठ छ यो आसयभन्दछन् आदौ इति हेलक्ष्मण आदि मध्य अन्त्य इन्मा सब सन्सार भयसोकको कारण छ यस्तो जानि कन [ स्वर्गका मोयजेत ] स्वर्गको जसलाई इच्छा हुन्छसो यज्ञ गरोस् इत्यादि वेदमाको विधि वाद तेसले गरिकन प्रेरित गरियेको संपूर्ण जाल

तेस्लाई त्याग गरि संपूर्ण जीवको स्वरूप भूतजो परमेश्वर तिनैलाइ भजोस् ॥ ५५ ॥

आत्मन्यभेदेन विभावयन्निदंभवत्यभेदेन मयात्मनातदा । यथाजलंवारिनिधौयथापयः क्षीरेवियद्व्योम्न्यनिलेयथानिल-५६

अब भमा अभेद भावनाले सब जगत मेरै स्वरूप हुँछ सो दृष्टान्त सहित वर्णन गर्दछन् ॥ आत्माइति ॥ हेलक्ष्मण सबको आश्रयजो म रामहुँ तेस्मायो आफ्ना स्वरूप जो जिव तेस्को अभेद गरि कन ध्यान गर्दो छंदो जबप्राणि स्थितहूं छन् तब म जो परमेश्वर तेसका साथ अभिन्न छ अर्थात् मिलेको छ यस्मा दृष्टान्त यो छ

कि जस्तै नदिका जल समुद्रमा मिल्नाले समुद्रै हुन्छ दुदमा जल मिल्नाले जल पनि दुद रूप हुंछ महाकासमा घटाकास मिल्नाले महाकासै हुन्छ कामिको आगो फुक्ने होद्दो वाट निक्लेको वायु वायुमा मिलेर तद रूप हुन्छ तस्तै मेरो स्वरुपमा मिले पछि म जस्तै हुन्छ अर्थात् जस्तै नदी आदि समुद्रमा मिल्नाले आफ्नू नाम रहदैन समुद्रै कहलाउछ तस्तै ज्ञानका महिमाले ममा मिल्नाले मेरै नाउँ हुन्छ जिवको पृथक् नाउँहुन्न यस्मा मडुंक उ पनि षदभंदछ ॥ यथा नद्यः स्यन्द मानाः समुद्रे अस्तं गच्छति नाम रूपे विहाय ॥ तथा विद्वान्नामरूपाद्विमुक्तः परात्परं पुरुषमुपैति दिव्यम् ॥ ५६ ॥

T

इत्थंयदीक्षेतहि लोकसंस्थितोजगन्मृषैवेतिविभावयन्मुनिः निराकृतत्वाच्छ्रुतियुक्तिमानतोयथेन्दुभेदोशिदिग्भ्रमादयः ५७

इत्थंइति ॥ हेलक्ष्मण लोकमा रहेका छन् ता पनि एस् प्रकारका जीवन्मुक्त अवस्थामा १ लोक व्यवहार गर्दा छ दा पनि श्रुति र युक्ति एस्का प्रमाणले खण्डित भै सक्या को छ एस हेतुले जगत् झुठो छ एस्तो निश्चय गर्दा छदो एस् प्रकार् जीव ब्रह्म ला ऐक्य गरि निवृत्त भयेको छ जगत् सत्यताको भ्रम जस्लाइ यस्तो हुन्छ त्राहाँ दृष्टान्त यो दिंछन् जस्तै १ चन्द्रमा लाइ भ्रमले २ चन्द्र देख्छ पछि एकात्वज्ञान

नोनिवृत हुँछ जस्तैरिङटा लागेको पुरुष् पूर्व दिशा पछिम दिसाको भ्रम गर्छ आफु घुम्छ रूख् घुमेभन्दछ इत्यादि भ्रम चेतपाये पछि निवृत्त हुँछ अर्थात् होस भये पछि दिशाको ज्ञान आफुलाइ रिंगटा जांद छ तस्तै जगत् भ्रम पनि तत्व ज्ञानैले निवृत्ति हुन्छ ॥ ५७ ॥

यावान्नपश्येदखिलं मदात्मकंताव न्मदाराधनतत्परोभवेत् । श्रद्धालुरत्यु र्जिभक्तिलक्षणोयस्तस्यदृश्योऽहमहर्निं शहृदि ॥५८॥

अव एसता प्रकारको ज्ञान हुने उपाय मेरो भजन्हो भनि कहंछन् ॥ यावदिति हे लक्ष्मण जब सम्म मैनेछू आधार जस्को

एस्ता सब जगत् लाई देखदैन तब सम्म श्रद्धा भक्ति युक्त भै कन अर्थात् परमेश्वर को भक्तिले नै ज्ञान हुन्छ अरू उपायले हुन्न यो दृढ विस्वासले जो मेरो आराध नामा तत्पर हुन्छ तेस्को हृदयमा रातदिन म दर्शन् दिन्छू अर्थात् तेस् भक्तका हृदयमा रहेर यस्तो बुद्धि दिन्छु कि जउन् बुद्धिले मलाई पाइन्छ ॥ ५८ ॥

रहस्यमेतच्छ्रुतिसारसंग्रहं मयाविनिश्च त्यतवोदितंप्रिय । यस्त्वेतदालोचय तीहबुद्धिमान्समुच्यतपातकराशिभिः क्षणात् ॥५९॥

रहस्यमेतदिति ॥ हेप्यारा भाई लक्ष्मण यो सब वेदकासारको संग्रह रूप रहस्य

T

अति गोपनीय ज्ञान मैले निश्चय गरेर तिमिलाई भने तेस्लाई जो बुद्धिमान् विचार गर्ला सोच्नमा सम्पूर्ण पापको राशि देखी छुट्ला अर्थात् इपाप् सम्पूर्ण पुरुषार्थ साधन भूत मेरै आराधन लाइ हुन दिन्नन् तेस लाई छोडाउँने यो रामगीताको अर्थानुसंधान पूर्वक पाठगर्नु एही परम उपाय हो ॥५९॥

भ्रातर्यदीदं परिदृश्यतेजगन्मायैव सर्वं परिहृत्यचेतसा । मद्भावनाभावितशुद्धमानसः सुखीभवानन्दमयो निरामयः ॥ ६० ॥

अब श्रीभगवान् रामचन्द्र आफुले कहेको सब गीताको अर्थको दृढताका वास्ते संक्षेपमा एकश्लोकले गरिकन फेरि भन्दछन्

भ्रातरिति हे भाइयो सब जगत्‌जो देखीन्छ सो सब माया नै हो यो जानिकन चित्तले सबलाई त्यागि मेरो भावनाले अर्थात् ध्यान ले शुद्ध भएको छ अन्तःकरण जस्का यस्ता तिमि सब दुःख र उपद्रव रहित परमानन्द स्वरूप भयौ तिमि सदासुखि रहू भनिकन श्रीरामजीले आफना भाइ लक्ष्मणलाई ग्रन्थका अन्त्यमा आशिर्वाद रूप मङ्गल सूचनगरे ६०

य-सेवते मामगुणं गुणात्परंहृदा कदा वा यदिवागुणात्मकम् । सोहं स्वपादाञ्चितरेणुभिः स्पृशन् पुनाति लोकत्रितयं यथारविः ॥ ६१ ॥

यःसेवतेइति ॥ हे लक्ष्मण जो पुरुष कोइ बखतमा अर्थात् पुण्य समूहको विपाक दशा

T

मा मायाका गुणले गरिकन रहित् र गुणवती माया देखिन् पर सच्चिदानन्द विग्रह जो म हूँ तेस्लाई अथवा सर्वज्ञत्व भक्त वात्सल्यादि अनन्त कल्याण गुन श्याम सुन्दर सगुण स्वरूप जो म हूँ तेस् लाई भक्ति गरेर जो सेवा गर्छ सो पुरुष मेरै स्वरूप हो त्यो पुरुष आफ्ना चरणका धुलाले गरिकन जस्लाइ छुवाउछ तेस्को अज्ञान रूपि अन्धकार लाई पवित्र गर्दछ जस्तै श्रीसूर्य आफ्ना किरणले गरिकन तिनत्रिलोक लाइ पवित्र गर्छन् तस्तै ६१

विज्ञानमेतदखिलं श्रुतिसारमकं वेदान्तवेद्यचरणेन मयैवगीतम्। यः श्रद्धयापरिपठेद्गुरुभक्ति युक्तो मद्रूपमेति यदि मद्वचनेषु भक्तिः ॥६२॥

अब एस् रामगीताको अर्थ विचार गर्न जउन पुरुषलाइ सामर्थ छैन तेस्ले रामगीता पाठ गर्नाले मात्र पनी ठुलो फल मिल्छ यो कहिन्छ ॥ विज्ञान मेतदिति ॥ हे लक्ष्मण सब श्रुतिको सार एक अद्धितीय विज्ञान अर्थात् विज्ञान जनक गीता शास्त्र सो वेदान्त शास्त्र भनिकन प्रसिद्ध छ जगत् सर्जनादि कर्म छ जस्को यस्तो जो म हुँ अर्थात् म सज्जन रामले गान गरेको यस्तो यो रामगीता गुरु भक्ति युक्त पुरुष श्रद्धा गरेर पढ्यो भने त्यो मेरे स्वरूपलाइ पाउँछ यस्ले यो सूचन गरियो कि गुरु वाक्य मा विश्वास युक्त पुरुष लाइ नैं वेदांत शास्त्रको प्रसिद्ध फल प्राप्ति हुन्छ ॥ (यस्य देवे परा भक्तिः यथा देवे तथा गुरौ। तस्यते कथिता ह्यर्था प्रकाशंते

T

महात्मनः इतिश्रुतेः ॥ ) अर्थात् जस्तै परमेश्वरमा भक्ति हुन्छ तस्तै गुरुमा पनि भक्ति गर्नु तसैले वेदान्त शास्त्र को ज्ञान हुन्छ बिना गुरु भक्तिले हुँदैंन ६५

श्रीरामचन्द्रजिले कृपा अति गरी भाई पियारा भनी । लक्ष्मणलाइ कहि यो दिय सकल ई प्राणी तरुन् ह्याँ पनी ॥ भन्ना खातिर राम लक्ष्मणजिको संबाद अमृत सरी । प्यारो पार्वतिथ्यैं कहे शिवाजिले अत्यन्त चाहा गरी ॥ १ ॥

इति श्री रामगीता भाषा समाप्तः ।

पुस्तक पाइनें ठेगानाः—

पं० विश्वराजशर्मा

गोर्खा पुस्तकालय, जालिपादेवी रोड काशी ।

मुद्रक—बाबू शिवनाथप्रसाद गोपाल प्रेस, बनारस ।

